● वर्ष १० ● अङ्क ९ ● वैशाख २०६६ ● पूर्णाङ्क ११७


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
  फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी,
  फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट,
  फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
  फोन: ०४६-५४०३३१
- **पाल्पा**, तानसेन,
  फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल,
  फोन:२२२००२१
- **गोरखा**, बसपार्क,
  फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा,
  फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१,
  फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि
  फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक,
  फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा
- **स्याङ्जा**, स्याङ्जाबजार
  फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे
  फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी

पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**


## धर्म विशेष


मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, कल्की मन्दिरसँगै काठमाडौँमा रहेको छ । परमपूज्य सद्गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## परामर्श सेवासम्बन्धी सूचना

सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी प्राप्त सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| स्थान | समय | बार |
|---|---|---|
| केन्द्रीय कार्यालय | साँझ ४:३० बजेपछि | सोमबार र मङ्गलबार |
| ललितपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | मंगलबार र बिहीबार |
| भक्तपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | शनिबार र बुधबार |
| बनेपा सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | प्रत्येक आइतबार |

## आश्रमका नियमित कार्यक्रमहरू

- आश्रम खुल्ने समय : प्रत्येक दिन बिहान १०:०० बजेदेखि साँझ ६:०० बजेसम्म ।
- गोरक्ष निखिल पुस्तकालय खुल्ने समय : प्रत्येक दिन १०:०० बजेदेखि साँझ ५:०० बजेसम्म ।
- परामर्श सेवासम्बन्धी भेटघाट : अपराह्न ३:०० बजेपछि ।
- आरती : प्रत्येक साँझ ५:०० बजे ।
- गुरु पूजन : प्रत्येक वृहस्पतिबार बिहान १०:०० बजेदेखि ।
- विशेष गुरु पूजन : प्रत्येक अंग्रेजी महिनाको २१ तारीख, बिहान १०:०० बजेदेखि ।
- आध्यात्मिक शक्ति अनुसन्धानमूलक नेपालको एक मात्र मासिक पत्रिका 'गोरक्ष निखिल वाणी'को नियमित प्रकाशन ।
- विभिन्न चाड-पर्व एवं अवसरहरूमा विशेष कार्यक्रम ।
- विशेष हवन: प्रत्येक महिनाको पहिलो सोमवार श्री शिव गोरक्ष हवन, पहिलो मङ्गलवार तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधवार तान्त्रोक्त महालक्ष्मी हवन र पहिलो बिहीवार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम संचालन ।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौँ ।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, कल्की मन्दिर, काठमाडौँ, नेपाल**
**फोन नं:** २०७१२००,२१००१५३, **पत्रिका वितरण फोन नं:** ०१-६२२५१७७ (CDMA Phone), URL: www.gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

*सर्वप्रथम त हाम्रोसामु आइरहेको नववर्ष २०६६ को पावन अवसरमा समस्त पाठक महानुभावमा एवं समस्त नेपालीहरुमा शान्ति, आनन्दका साथ जीवनलाई अध्यात्मतर्फ अग्रसर हुने प्रेरणा मिलोस् भनी परमपूज्य सद्‌गुरुदेवहरुसमक्ष प्रार्थना गर्दै नववर्षको हार्दिक मंगलमय शुभकामना व्यक्त गर्न चाहन्छौँ।*

*२०६५ साल हामीबाट बिदा भएको छ। बितेको वर्ष कतिका लागिका उपलब्धिमूलक भयो होला, कतिका लागि आंशिक उपलब्धिमूलक भयो होला भने कतिका लागि प्रतिकूल।*

*सिद्धाश्रम शक्ति केन्द्रको लागि बितेको वर्ष उपलब्धिमूलक नै भयो। ठाउँ-ठाउँमा संगठन विस्तारका साथमा वर्षभरी नै सम्पन्न कार्यक्रमहरु बिना रोकावट भव्यरुपमा नै सफल भए। कार्यक्रमहरुका शृंखलाहरु निरन्तर रुपमा नै सम्पन्न भए। हजारौँ व्यक्तिहरु आश्रमसँग जोडिए साथै आस्था विश्वासको केन्द्र पनि बन्यो।*

*यस वैशाख महिना सिद्धाश्रम शक्ति केन्द्रको लागि अति नै महत्वपूर्ण महिना रहेको छ कारण आफ्ना परम आराध्य सद्‌गुरुदेवहरुको अवतरण एवं प्रकट दिवस परेको छ। यसरी एउटै महिनामा यस्ता दिव्यतम कार्यक्रमहरु पर्नुलाई आफैमा विशेष संयोग मान्न सकिन्छ। सि.श.के.ले परमपूज्य सद्‌गुरुदेवको दिव्यतम अवतरण दिवसलाई भव्य कार्यक्रमका साथ मनाउन लागेको छ। यस्तो दिव्य कार्यक्रममा आएर सहभागी बन्नु प्रत्येक भक्त, शुभचिन्तकको लागि दिव्यतम अवसर हो। त्यसैले सम्पूर्ण महानुभावहरुलाई उपस्थितिको लागि हार्दिक अनुरोध एवं आमन्त्रण गर्दछौँ।*

*त्यस्तै परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथको दिव्यतम प्रकट दिवसको पावन अवसरमा विशेष कार्यक्रमका साथै छैटौं रोट महोत्सव भव्यरुपमा सम्पन्न गर्ने तयारीमा यो केन्द्र रहेको छ। त्यसैले यस दिव्यतम कार्यक्रममा पनि यहाँहरु सबैलाई हार्दिक आमन्त्रण गर्दछौँ, एकपटक अवश्य गोरखा आउनुहोला।*

*यसपटकको पत्रिकालाई हामीले 'धर्म विशेष'को रुपमा निकालेका छौँ। समाजमा धर्मलाई हेर्ने दृष्टिकोण, यसलाई गरिने परिभाषा अलि संकुचित भएको पाइन्छ। संकुचित दायराबाट विराट् अर्थ बोकेका शब्दहरुको परिभाषा खोज्न सकिँदैन। त्यसैले धर्म कुनै व्यक्ति विशेष वा संघ सम्प्रदाय विशेष नभएर मानवकल्याणको मार्ग बोकेको विषय हो। त्यसैले जीवजगत्‌को कल्याणको लागि मानवलाई उच्चतामा लैजानको लागि हाम्रा पूर्वज ऋषिमुनीहरुद्वारा प्रतिपादित धर्मको मूल्य मान्यतालाई बुझ्नु आवश्यक छ। यसलाई व्यवहारमा उतारी जीवनलाई उच्चतामा लैजानु आवश्यक छ। धर्मलाई केवल मान्यता वा औपचारिकतामा सीमित राख्नुभन्दा यसका गूढ पक्षलाई बुझेर अगाडि बढ्नुपर्ने, वैज्ञानिक विश्लेषण गरी जीवनमा लागू गर्नुपर्ने आजको आवश्यकता हो। त्यसैले यस सम्बन्धी खोज अनुसन्धान हुनु आवश्यक छ। यस अंकमा हामी केही पक्षहरुलाई मात्र समावेश गरेका छौँ। त्यसैले तपाईं हामी मिलेर खोज गरौँ, अनुसन्धानमा लागौँ, यसलाई जीवनमा उतारी जीवनलाई उत्कर्षमा पुऱ्याउँ।*

*अन्तमा यस अंक प्रकाशन गर्ने क्रममा हामीबाट भए गरेका कमी कमजोरी, न्यूनताहरुका लागि परमपूज्य सद्‌गुरुदेवहरुसमक्ष र यहाँहरुसमक्ष क्षमा माग्दै आवश्यक सल्लाह, सुझावको अपेक्षा गर्दछौँ।*

*अस्तु!*

# के हो धर्म ?

जसरी कुनै पनि शासन तन्त्रलाई सुव्यवस्थित ढङ्गले चलाउन संविधानको आवश्यकता हुन्छ, त्यसरी नै मनुष्य समाजलाई सन्तुलित र सुव्यवस्थित राख्नका लागि मनीषिहरूले जुन मूल सिद्धान्तको अन्वेषण गरे, त्यसलाई धर्म भनियो। धर्मको पालनबाट हाम्रो लौकिक र पारलौकिक जीवन समुन्नत र सुखी हुन्छ। त्यसैले भनिएको छ– **यतो अभ्युदय निःश्रेयस सिद्धिः स धर्म**। मनुष्यको कर्तव्य र अकर्तव्य, पाप र पुण्य, शुभ र अशुभ कर्मको सम्बन्ध धर्मसँग छ। पाप र पुण्यको स्पष्ट व्याख्या गर्न र यी दुवैको ठीक-ठीक सीमा निर्धारण गर्न सक्नु बडो कठीन छ किनकि यसको निर्णय गर्नका लागि देश र कालको विचार गर्नु पनि परमावश्यक छ। यस्ता अनेक कुरा छन् जुन हाम्रो देशमा पाप मानिए पनि युरोप तथा अमेरिकाका अनेक देशमा त्यसलाई पाप मानिँदैन, न त त्यसको कुनै कुपरिणाम नै देख्नमा आउँछ। धर्म एक रस र अखण्ड छ र धर्मको रक्षाको उपाय हाम्रा ऋषिहरूले बताउनु भएको छ– **आत्मनः प्रतिकूलानि परेषां न समाचरेत** अर्थात् जुन कुरा आफूलाई नराम्रो लाग्दछ त्यो अरूप्रति नगर्नू। यसैको आधारमा गोस्वामीजीले पाप-पुण्यको परिभाषा यसरी बताउनु भएको छ–

**पर-हित सरिस धर्म नहीं भाई।**
**पर-पीडा सम नहिं अधमाई॥**

धर्मको सिद्धान्तलाई केवल सुन्ने मात्र नभई जीवनमा धारण गर्नु पनि परम आवश्यक छ। **धारणाद्धर्म इत्याहुः** अर्थात् जुन धारण गरिन्छ त्यही धर्म हो। हामी जुनसुकै 'धर्म' शब्दको उच्चारण गरौँ, त्यसबाट हाम्रो अभिप्राय 'वाद' (ism) लक्षित हुँदैन, केवल अध्यात्मविचार नै धर्म होइन, धर्म त्यो निष्ठा, विचार तथा क्रियापद्धतिको नाम हो जो सबैलाई धारण गर्छ, जसबाट मनुष्यको सात्विक उत्थान हुन्छ। जो प्राणी मात्रको वास्तविक हित तथा सुखको साधन हो तथा अन्तमा निःश्रेयस वा मोक्षको प्राप्ति गर्नेवाला हो, त्यही धर्म हो।[१]

धर्मगुरु दलाई लामाले धर्मलाई मानवीय जीवनमा गुणहरू वृद्धि गर्ने सर्वोच्च माध्यम मान्नु भएको छ। उहाँका अनुसार उत्कृष्ट जीवन बाह्य समुन्नतिमा भर पर्दैन अपितु यो आन्तरिक विकास, शान्ति र प्रसन्नतामा निर्भर छ।

धर्मका दुई भाग छन्– शाश्वत् र परिवर्तनशील। शाश्वत् सिद्धान्त अपरिवर्तनशील हुन्छ भने परिवर्तनशील सिद्धान्त समयानुसार परिवर्तन भइरहन्छ। बदलिएको

परिस्थितिअनुसार नियमहरूको परिवर्तन पनि वाञ्छनीय हुन्छ । वेददर्शी ऋषि-मुनिहरूले युग-युगमा प्राय: मनुष्यको स्वभावअनुसार नै धर्मको व्यवस्था गरेका छन् । तिनै धर्म मानिसका लागि यस लोक र परलोकमा कल्याणकारी हुन्छन् । तर धर्ममा समयानुकूल परिवर्तन गर्न सक्ने व्यक्तित्व भनेका त वेददर्शी ऋषि हुन् । वेददर्शीको अर्थ ज्ञानी हो । ज्ञानीले धर्मको सूक्ष्म अध्ययन गरेका हुन्छन् । ज्ञानीहरूले कुनै राग-द्वेष नराखीकन मानव मात्रको कल्याणका लागि शुद्ध भावनाबाट प्रेरित भएर युगानुरूप कर्तव्य निर्वाह गर्दछन् तथा अरूलाई मात्र उपदेश नदिईकन आफूले पनि त्यस सिद्धान्तको परिपालन जीवनमा गर्दछन् । हरेक व्यक्तिमा यति धेरै सुझबुझ हुँदैन कि उसले व्यापक दृष्टिले विचार गरेर आफ्नो कर्तव्यको स्वत: निर्धारण गर्न सकोस् । अत: तत्कालीन महापुरुषहरूको अनुशरण नै श्रेयष्कर छ ।

**अद्रोहश्चाऽप्यलोभश्च दमो भूतदया तपः ।**
**ब्रह्मचर्यं तथा सत्यमनुक्रोशः क्षमा धृतिः ॥**

उपर्युक्त श्लोकमा अद्रोह, अलोभ, इन्द्रिय-निग्रह, भूतदया, तप, ब्रह्मचर्य, सत्य, अनुक्रोश, क्षमा तथा धृतिलाई धर्मको मूल भनिएको छ । ईश्वरोपासनाको पद्धति जुनसुकै किन नहोओस्, सत्यवादी, दयालु, परोपकारी व्यक्तिलाई धर्मात्मा तथा हिंसावृत्ति भएका र लोभीलाई अधर्मी भन्ने लोक-व्यवहारमा पनि देखिन्छ ।

सत्यानुरागी सन्तहरूका अनुसार सदाचारबाट नै धर्मको उत्पत्ति हुन्छ र धर्मको प्रभावबाट आयुको वृद्धि हुन्छ । जो मानिसले धर्मको आचरण गर्दछ र लोक-कल्याणकारी कार्यहरूमा लागिरहन्छ, उसको दर्शन नभए पनि मानिसहरू नाम सुनेर पनि उसलाई प्रेम गर्दछन् । जो मानिस धर्मलाई नजान्ने, गुरु र शास्त्रको आज्ञालाई उल्लङ्घन गर्ने, दुराचारी, शीलहीन, धर्मको मर्यादालाई भङ्ग गर्ने हुन्छ, ऊ मरेपछि नरकमा जान्छ भनी बताइएको छ । सदाचारले नै मानवको कल्याण गर्दछ र कीर्ति बढाउँछ, यसबाट आयुको वृद्धि हुन्छ र यसैबाट नराम्रो लक्षणको नाश हुन्छ । सम्पूर्ण आगमहरूमा सदाचारलाई श्रेष्ठ बताइएको छ ।

**नेपाली शब्दसागरका अनुसार धर्म–**

व्यक्ति वा वस्तुको मूल वृत्ति, प्रवृत्ति, प्रकृति, स्वभाव, नियत, नीति, स्वाभाविक गुण, सहज वृत्ति, श्रेय, सुकृत, नियमित र निर्धारित काम वा व्यवहार, सुख र स्वर्ग प्राप्त हुने भन्ने लोक विश्वासको सुकर्म, पुण्य-कर्म, लोक हितका लागि स्वीकारिने कर्तव्य-कर्म, सदाचार, सत्कर्म, ईश्वर प्राप्ति वा सद्गतिका लागिको शास्त्रनिहित कर्म, स्वधर्म, सामूहिक कर्तव्य, कुनै मान्यजन वा महापुरुष वा आचार्य वा ऋषि वा ग्रन्थनिर्दिष्ट परलोक सुख प्राप्ति हुने उत्तम कार्य, गुण-परिणाम-स्थिति आवश्यकताअनुसार सर्वथा उचित ठहरिने काम, उचित-अनुचितको विवेक गर्न सक्ने चित्तवृत्ति, चरित्र रक्षा, परोपकार, कुनै महात्मा वा महापुरुषद्वारा प्रतिपादित सिद्धान्त भनेर धर्मको परिभाषा दिइएको पाइन्छ ।

**संस्कृत-नेपाली वृहत् शब्दकोशका अनुसार धर्म–**

१. धर्मराज २. युधिष्ठिर ३. उपनिषद् ४. तरीका ५. भक्ति ६. सत्सङ्ग ७. यज्ञ ८. समानता ९. नियम १०. इमान १. न्याय-इन्साफ १२. कानून १३. धर्मशास्त्र १४. अलङ्कार-शास्त्रमा उपमेय र उपमानमा समानरूपले रहने धर्म १५. उचित-अनुचितको विचार गर्ने चित्तवृत्ति १६. माता-पिता, गुरु आदिको त्यस्तो वचन वा मत जुन पालना गर्दा इहलोक, परलोकमा सुख र ईश्वर प्राप्ति हुन सक्छ १७. त्यस्तो कर्म जुन गर्नाले यो लोकमा सुख शान्ति र जनकल्याण हुन्छ, १८. कुनै वस्तुको गुण, जसमा त्यस्को मुख्य आधार रहन्छ, जस्तै पानीको धर्म-चिसो, आगाको धर्म-तातो इत्यादि, १९. ब्रह्माजीको दाहिने स्तनबाट उत्पन्न सम्पूर्ण लोकलाई सुख दिने एक देवता, २०. धरती विश्वम् यस्तो विग्रहमा धृञ्-धारणे, भ्वादि उवयपदिबाट अर्तिस्तु० उणादि सूत्र १/१४० ले मन् प्रत्यय हुँदा धर्म शब्द निष्पन्न हुन्छ । संसारमा मुख्य एघार धर्म छन्– सनातन, बौद्ध, जैन, यहुदी, मुसलमान, क्रिश्चियन, कन्फ्यूसियस, सिन्तो, आरसी धर्म, एमीनिष्ट र फेटिष्ट । सनातन धर्मअनुसार धर्मको सगुणस्वरूप– दाहिनेतिर अक्षमाला, बायाँतिर पुस्तक भएको सबै अंगमा गहना लगाएको सेतो वर्णको र सेतै वस्त्र पहिरेको चार मुख, चार पाउ, चार बाहु र शरीर भएको स्वरूपलाई धर्म भनिएको छ ।

महापुरुषहरूले धर्मलाई यस लोक र परलोकको सफलताको साधन मान्दछन् । सृष्टिको प्रारम्भमा कानूनको आवश्यकता थिएन, त्यसबेला सर्वव्यापक शाश्वत् धर्मद्वारा नै जनजीवन परस्पर सुरक्षित हुन्थ्यो । त्यतिबेलाको स्थितिलाई महाभारतमा भीष्मले यसरी चित्रण गरेका छन्–

**न राज्यं न च राजासीन्न दण्डयो न च दाण्डिकः ।**
**धर्मेणैव प्रजाः सर्वा रक्षन्ति स्म परस्परम् ॥**

यसबाट धर्मको स्वरूपबारे धेरै स्पष्ट हुन सकिन्छ । उपासनाको नाम सम्प्रदाय वा मजहब हो जुन एकदेशीय हुन्छ तर धर्म सार्वभौम हुन्छ । यसमा सम्पूर्ण सद्गुणहरू समावेश भएको छ । धर्म कुनै मत, मान्यता, सम्प्रदाय अथवा मजहबको नाउँ होइन । धर्म त्यो धारक सत्य हो जसले मानिसलाई आफ्नो मर्यादामा कायम राख्दछ, तल झर्न दिँदैन । महाभारतमा यस कुरालाई यसरी परिभाषित गरिएको छ–

**धारणाद् धर्ममित्याहु**
**धर्मेण विधुताः प्रजा ।**
**यः स्याद् धारण संयुक्तः**
**स धर्म इति निश्चयः ॥**

धर्मले व्यापक र वृहत् अर्थबोध गर्दछ । धर्म शब्दले बताउने समग्र अर्थलाई न अंग्रेजीको religion शब्दले, न जर्मनीको sittlieh keit शब्दले, न ऊर्दूको मजहब शब्दले नै बुझाउन सक्दछ। सम्प्रदाय शब्द पनि धर्म शब्दले बुझाउने समग्र अर्थको बोध गराउन असमर्थ छ किनभने सम्प्रदाय शब्दको अर्थ संकुचित देखा पर्दछ । धर्म शब्दले त्यो सार्वभौम सत्यको बोध गराउँछ जो सम्पूर्ण विश्वजीवनको धारक रहेको छ । अर्थबोधको विस्तृतरूपका दृष्टिले विचार गर्दा धर्म शब्दको तुलनामा पुग्न सक्ने कुनै पनि अर्को शब्द छैन। वेदद्वारा प्रतिपादित जीवन मूल्यहरूमा धर्मको सर्वोपरि महत्त्व बताइएको छ । त्यस विश्वधारक धर्मकै दुई रूपका रूपमा 'ऋत' र 'सत्य'लाई ठाउँ दिइएको छ । विश्व जीवनको प्रत्येक पहलमा धारक आधारका रूपमा यही धर्म रहेको हुन्छ। त्यसैले राष्ट्रको परिकल्पनाभित्र पनि त्यो धारक धर्म नै अन्तर्निहित हुन्छ ।[२]

धर्मबाट नै मानिसलाई ब्राह्मणत्व र देवत्वको प्राप्ति हुन्छ । धर्मले नै मानिसलाई पवित्र गर्दछ । मनुष्य जीवनको उद्देश्य आत्मोन्नति हो । मनुष्यत्व, द्विजत्व र देवत्व यसका क्रमिक विकासका अवस्था हुन् । स्पष्ट छ कि ब्राह्मणत्व र देवत्व कुनै जाति विशेष नभएर मानवका विकसित उपलब्धिहरू हुन् । धर्म सिद्धान्तहरूलाई जीवनमा ओतप्रोत गरेर तदनुसारको आचरणबाट नै मानिसले यी अवस्थाहरूलाई प्राप्त गर्न सक्दछन् । धर्मको सहाराबाट यी अवस्थाहरूको विकास गर्नु पर्दछ किनकि यी अवस्थाहरूमा नपुगीकन मानिसले आफ्नो लक्ष्य प्राप्त गर्न सक्दैन । ब्राह्मणको अर्थ हो न्यूनतम भौतिक वस्तुहरूबाट निर्वाह गरेर आफ्नो समग्र ज्ञान प्रसारमा लगाउने व्यक्ति। देवताको अर्थ हो आफ्नो लागि केही पनि नराखी आफ्ना सबै उपलब्धिलाई समाजको लागि प्रदान गर्ने व्यक्तित्व ।

आफ्नो जीवनमा धर्मलाई धारण गर्ने मानिस सफल जीवन जिउँछ। धर्म कुनै पूजापाठ वा कर्मकाण्डको नाम होइन। यसको प्रभाव हाम्रो व्यक्तिगत, पारिवारिक तथा सामाजिक जीवनमा स्पष्टरूपमा परिलक्षित हुनु पर्दछ । समस्त नारी जातिप्रति मातृ भावना, आफ्नी धर्मपत्नीप्रति आफ्नो शरीरको अंगमा जस्तो प्रेम तथा समाजका लागि भ्रातृत्व भावना र महापुरुषहरूका प्रति आदर तथा श्रद्धाको अभिव्यक्ति यही धर्मको वास्तविक स्वरूप हो । सम्पूर्ण पुरुषार्थको साधनस्वरूप अद्वितीय विद्या, बल, बुद्धिसम्पन्न, देवदुर्लभ मनुष्य चोला र त्यसको रक्षाका विविध साधन ईश्वरबाट नै हामीलाई प्राप्त हुन्छन्, जसको सहायता हामीलाई प्रतिक्षण प्राप्त छ, जन्मदेखि नै आमाबाबुले आफ्ना सन्तानलाई प्राणभन्दा प्यारो गरेर पालन-पोषण गर्दछन्, यसलाई सबै कुराबाट सुयोग्य बनाएर अन्तमा सर्वस्व समर्पण गरेर आफ्नो कर्तव्य पूरा गर्दछन्, गाईको उपकारलाई को सहृदय बिर्सन सक्दछ ? रूखा-सुखा घाँस खाएर अमृततुल्य दूध, दही, घिउ दिने, जसलाई खाएर नै हामी बलवान्, बुद्धिमान् हुने गर्दछौं, जसको

## धर्मपत्नी

जुन घरमा पति-पत्नीको मन मिलेको छ त्यहाँ सबै सम्पदाहरू नित्य रमण गर्दछन् । यसैकारण हाम्रो संस्कृतिमा वाइफ, बीबी आदि नभएर पत्नी शब्दको अगाडि 'धर्म' शब्द जोडिएर रहेको छ– 'धर्मपत्नी' । धर्म साथमा भएकाले पत्नी वासनापूर्तिकी साधन नभएर धर्माधर्मकी सहभागिनी भएर परलोकमा पनि साथ छोड्दिनन्। यो त्याग तथा प्रेमको पराकाष्ठा हो। यही संस्कृतिमा चूडाला, मैत्रेयी, मदालशा, तारा, दुर्गावतीजस्ता अनेक ज्ञानी, भक्त नारीहरू तथा वीराङ्गनाहरू हुर्के, जसले विपत्मा परेका स्वामीहरूलाई सत्यको मार्ग देखाएका थिए तथा आफ्नो पवित्र नारी जीवनलाई सार्थक पारेका थिए ।

## दुई प्रकारका धर्म

भगवान्मा भक्ति हुनु परधर्म हो, यसको फल परमानन्द प्राप्ति हो । तर अपरधर्म ईश्वरभक्तिलाई छोडेर वर्णाश्रमधर्मको पालना गर्नु मात्र हो । वर्णाश्रमधर्मको परिणाम स्वर्गादिक लोक-प्राप्ति हो । एउटा विचारणीय कुरा के छ भने अपरधर्म अर्थात् वर्णाश्रमधर्म परिवर्तनशील छ तर परधर्म सदा एकरस एवं स्वभाविक हुन्छ। अर्को महत्त्वपूर्ण कुरा छ कि शास्त्रले प्रत्येक वर्ण एवं प्रत्येक आश्रमधारी अपरधर्मावलम्बीहरूलाई प्रमुखरूपमा आदेश दिएको छ कि वर्णाश्रमधर्मको साथसाथ परधर्म पनि हुँदै रहोस् । ब्रह्मचारीलाई पनि ईश्वरोपासनाको आदेश, गृहस्थलाई पनि, वानप्रस्थीको लागि पनि र संन्यासीको लागि पनि परधर्मको आदेश दिइएको छ। यसरी नै प्रत्येक वर्णलाई ईश्वरभक्तिको आदेश दिइएको पाइन्छ । यही नै कर्मयोग हो । भावार्थ यो हो कि अपरधर्मस्वरूप वर्णाश्रमधर्ममा परधर्मस्वरूप ईश्वरभक्ति संयुक्त गर्नाले परधर्मकै परिणाम प्राप्त हुन्छ। केवल अपर वा आगंतुक प्राकृत-धर्मबाट ईश्वर प्राप्ति वा मायानिवृत्तिको समस्या हल हुन सक्दैन ।

*(प्रेमरस सिद्धान्तबाट)*

प्यारो सन्तान आफ्नो शरीर भाँचेर हाम्रो अन्नोत्पादनमा सहायता गर्दछ, मरेर पनि जो उपकार गर्न छोड्दैन, गुरु र शास्त्रको कृपाले नै मनुष्यलाई सत्य र असत्यको, लोक र परलोकको, शुभ र अशुभको, हित र अहितको, आफ्नो र ईश्वरको स्वरूपको परिचय प्राप्त हुन्छ जुनबिना मानव दानव वा पशुतुल्य भइहाल्दछ, उसको यो विवेक वा ज्ञान एक मात्र गुरु र शास्त्रद्वारा नै प्राप्त हुन्छ, यी सबैप्रति हाम्रो पनि दायित्व छ। यसै दायित्वको निर्वाह गर्नु परमधर्म हो।[३]

वास्तवमा दायित्व निर्वाह वा कर्तव्य पालन नै धर्म हो। यी धार्मिक भावनाको विकास गर्दै अन्तमा हामी **सर्वभूत हितेरता**को अनुभूतिको गहिराइमा उत्रन्छौँ, तब मात्र हुन्छ हाम्रो चरमोत्कर्ष। ठूल्ठूला महात्माहरूले यस अविनाशी धर्मको उपासना गरेका छन्। अविनाशी धर्मको मूल स्वरूप हो कुनै पनि प्राणीको दु:खमा दु:खको अनुभव गर्नु र सुखमा सुखको अनुभव गर्नु। यसै अनुभूतिद्वारा नै आत्मालाई परमात्माको पद प्राप्त हुन्छ। यही मानव जीवनको अन्तिम उपलब्धि हो। यसपछि अरू केही पाउन बाँकी रहँदैन। यसै चरम लक्ष्यको प्राप्तिको लागि धर्मको रचना भएको हो। तर तुरुन्तै हामीलाई यस लक्ष्यको प्राप्ति भने हुँदैन। यसका लागि त आफ्नो भावनालाई क्रमश: विकसित गर्दै लानु पर्दछ। आत्म निर्माण, परिवार निर्माण एवं समाज निर्माणद्वारा नै हामी यस अनुभूतिसम्म पुग्न सक्षम हुन्छौँ। यसको प्रारम्भ व्यक्तिगत धर्म पालनबाट हुन्छ।

धर्मलाई कर्तव्य रूपमा गरिनु पर्दछ। धार्मिक कृत्यहरूको उद्देश्य मानिसलाई उन्नतिशील बनाउनु हो। धर्म आडम्बरका लागि होइन, आडम्बर त मानिसहरूलाई धोका दिनका लागि गरिन्छ। यो दुष्टताको लक्षण हो। यदि हामीले दुष्टताको पोषणका लागि धर्म पालनको नौटंकी गर्दछौँ भने त्यो धर्म नभएर अधर्म बन्दछ। अत: धर्माचरणपूर्व हाम्रो नियत शुद्ध हुनु पर्दछ।

धर्मलाई राम्रोसँग नबुझी सम्पन्न गर्दा आफूलाई ठीक लागेको कुराले पनि कति भयानक नकारात्मक नतिजा भोग्नु पर्दछ भन्ने उदाहरण कौशिक नामक तपस्वीको उदाहरणबाट पनि प्रष्ट हुन्छ। उनको कथा यसप्रकार छ– कौशिक वनमा तपस्या गरिरहेका थिए। एकपटक एउटा गाई कसाइको बन्धन तोडेर भाग्यो। कौशिकले देख्दादेख्दै उक्त गाई वनमा प्रवेश गर्‍यो। केही बेरपछि कसाइ त्यहाँ आएर कौशिकसँग गाईको बारेमा सोधन थाल्यो। उनले सत्यवादी हुँदै गाईको यथार्थ ठेगाना बताए। कसाइले गाईलाई भेटेर काट्यो। तर कौशिकको सत्यवादिताको परिणामस्वरूप उनले नरकको यातना भोग्नु पर्‍यो। अत: धर्मको सही स्वरूप र त्यसको उद्देश्य बुझ्ने प्रयत्न गर्नु पर्दछ। अन्यथा धर्मको गलत प्रयोग गर्नाले हामीले पनि पश्चात्ताप गर्नुपर्ने समय आउन सक्छ। अत: अत्यन्तै सोची-विचारी आफ्नो कर्तव्यको निर्णय गर्नुपर्दछ।

योगीहरूले धर्मलाई व्यापकरूपमा लिएको पाइन्छ। सृष्टिक्रममा ब्रह्मले लिएका स्वरूपको निरूपण गर्दै ती स्वरूपहरूलाई बुझ्न सकेमा साँचो अर्थमा धर्मको निर्वाह भएको मान्नुपर्दछ भन्ने योगमत पाइन्छ। ब्रह्मले आफ्नो काल, गति, चेतना र क्रियाशक्ति अर्थात् प्रकृतिको सहायताद्वारा सृष्टिको रचना गर्दछ। स्मरणीय कुरा के छ भने सृष्टिको रचना गर्ने क्रियाशक्तिलाई नै 'प्रकृति' भनिन्छ। कालद्वारा जब यो शक्ति फेरि स्थिर अवस्थामा ल्याइन्छ, त्यस अवस्थालाई नै ब्रह्म भनिन्छ। त्यो अवस्थालाई कालातीत (प्रलयको) अवस्था पनि भनिन्छ, जसलाई शास्त्रहरूले 'महाकाल'को संज्ञा दिएका छन्। ब्रह्मको कालगत प्रक्रियाको अभिव्यक्ति नै महामाया जगज्जननी महाकाली हुनुहुन्छ। यसबाट यो सिद्ध हुन्छ कि चार स्वरूप नै मनुष्यका विशुद्ध धर्मका मूल आधार हुन्। जीव (Lower self) ब्रह्म (Higher self) कै अंश हो। त्यसैले ब्रह्ममा भएका चार स्वरूप जीवमा पनि छन्। सृष्टि विज्ञानको यो चतुष्कला-सिद्धान्त सृष्टिको आरम्भ हुनुभन्दा पहिले पनि थियो र अहिले पनि चलिनै रहेको छ, पछिसम्म पनि चलिनै रहनेछ। शाश्वत् वा सनातन यस सार्वभौम सिद्धान्तलाई अनुसरण गर्नु वास्तविक धर्म हो।[४]

जीव परमात्माकै अंश भएको नाताले नै परमात्माको चरित्रलाई धारण गर्ने सामर्थ्य जीवले बोकेको हुन्छ। तसर्थ, परमात्मा प्राप्त गरेर परमात्माकै चरित्रअनुरूप जीवन जिउन सकियो भने चरित्र निर्माण भएको सम्झनुपर्दछ। परमात्माको महान् स्वभाव, महान् आदर्श अर्थात् चरित्रलाई धारण गर्नु नै यथार्थमा 'धर्म' हो।[५]

सन्दर्भग्रन्थहरू– १. धर्मविज्ञान भाग १, खप्तडबाबा, २. धर्मलोक, वर्ष १ अंक १, ३. म र मेरो कर्तव्य, खप्तडबाबा, ४. चरित्र विज्ञान, स्वामी सच्चिदानन्द विशुद्धदेव, ५. पूर्ववत्।

**नियम अनुशासनको पालना गर्नु परम धर्म हो, नगर्नु परम पाप हो।**
**गुरूहरूको संरचनाअनुसार चल्नु महाधर्म हो, नचल्नु महापाप हो।**
**– गोरक्ष निखिल दर्शन**

# शास्त्रहरूमा धर्मको स्वरूप

चतुर्वक्त्रश्चतुष्पादश्चतुर्वाहुः सिताम्बरः ।
सर्वाभरणवान्श्वेतो धर्मः कार्योविजानता ॥
दक्षिणे चाक्षमाला च तस्य वामे तु पुस्तकम् ॥
(विष्णुधर्मोत्तरे)

हरिवंशअनुसार धर्मका चार पाउहरू चार आश्रमबाट व्यक्त हुन्छन्– ब्रह्मचर्याश्रमबाट स्वाध्याय, गृहस्थ आश्रमबाट पवित्रता, वानस्प्रथ आश्रमबाट गौरवान्वित तपस्या र संन्यासाश्रमबाट तत्त्वमसि महावाक्यको विचार ।

पादा धर्मस्य चत्वारो यैरिदं धार्यते जगत् ।
ब्रह्मचर्येण व्यक्तेन गृहस्थेन च पावनाः ॥
गुरुभावेन वाक्येन गुरुमार्गानुगामिना ।
इत्येते धर्मपादाः स्युः स्वर्गहेतोः प्रचोदिताः ॥
(हरिवंशे)

हरिवंशमा धर्मका पाँच पाउमध्ये सत्ययुगमा चार पाउको धर्म, एक पाउको अधर्म, त्रेता युगमा तीन पाउको धर्म, दुई पाउको अधर्म हुनछ, द्वापर युगमा दुई पाउको धर्म, तीन पाउको अधर्म हुन्छ र कलियुगमा एक पाउको धर्म र चार पाउको अधर्म हुन्छ ।

सत्ये तत्र धर्मश्चतुष्पादो ह्यधर्मः पादविग्रहः । त्रेतायां द्वाभ्यामधर्मः पादाभ्यां त्रिभिर्धर्मो व्यवस्थितः । द्वापरे द्वाभ्यां धर्मःस्थितः पद्भ्यामधर्मस्त्रिभिरुत्थितः कलौ तत्राधर्मश्चतुष्पादः स्याद्धर्मः पादविग्रहः । (हरिवंशे)

वैशेषिकअनुसार– अभ्युदय र मोक्षको सिद्धि गराउने कर्मलाई धर्म भनिन्छ । यतोऽभ्युदयनिःश्रेयससिद्धिः स धर्मः (वैशेषिकसूत्रे) ।

न्याय शास्त्रअनुसार–वेदले बताएको कर्म गर्नुलाई धर्म भनिन्छ । विहितकर्मजन्यो धर्मः (तर्कसङ्ग्रहे) ।

जैमिनिसूत्रअनुसार–कुनै गर्ने विधान भएको वाक्यको लक्षणसम्बन्धी अर्थलाई धर्म भनिन्छ । चोदनालक्षणोऽर्थो धर्मः (जैमिनिसूत्रे) ।

अमरककोषअनुसार– वेदले बताएको सदाचार र यज्ञादि गर्नुलाई धर्म भनिन्छ । श्रुतिः स्त्री वेद आम्नायस्त्रयी धर्मस्तु तद्विधिः (इत्यमरः) ।

याज्ञवल्क्यस्मृतिअनुसार– धर्मको लक्षण वा धर्म हुने काम– देश (कृष्णसार मृग स्वच्छन्द घुम्ने देश, अर्थात् हिंसा, अत्याचार आदि नभएको देश), काल (सङ्क्रान्ति, जन्माष्टमी जस्ता पर्वको दिन), उपाय (धर्म शास्त्रले बताए अनुसार कर्म गर्ने विधि) र द्रव्य (अरूलाई बाधा नपारेर प्राप्त भएको धन प्रेम र श्रद्धासाथ दान गर्नु वा दान लिनु) लाई धर्मको लक्षण भनिन्छ । श्रुति (वेद), स्मृति (धर्मशास्त्र), सदाचार (कुल परम्परादेखि वा विद्वान् आस्तिक मानिसबाट चलाइएको धार्मिक चलन) र आफ्नो आत्मालाई प्यारो लाग्ने (शास्त्रविरुद्ध नभएको) कर्म ।

देशे काल उपायेन द्रव्यं श्रद्धासमन्वितम् ।
प्राप्ते प्रदीयते यत्तत्सकलं धर्मलक्षणम् ।
श्रुतिस्मृतिसदाचारः स्वस्य च प्रियमात्मनः ।
सम्यक्सङ्कल्पजः कामो धर्ममूलमिदं स्मृतम् ॥

राजा रन्तिदेवले राज्य, स्वर्ग, मोक्षको इच्छा नगरी दुःखीको दुःख शान्त पार्नु नै आत्माको प्रिय धर्म माने ।

न त्वहं कामये राज्यं न स्वर्गं नापुनर्भवम् ।
कामये दुःखतप्तानां प्राणिनामार्तिनाशनम् ॥

शास्त्रविरुद्ध नभएको आफ्नो मनले यसो गर्छु भनी निधो गरिएको कर्मलाई धर्म भनिन्छ । जस्तै, युधिष्ठिरले आफ्ना भाइहरू र अरू राजाहरूसँग कहिल्यै तीतो कुरा बोल्दिन, सधैं बन्धुको आज्ञा मानेर उनीहरूले भनेको कुरा पूर्ण गर्छु भनी निश्चय गरेर त्यसलाई धर्म माने ।

न प्रवक्ष्यामि परुषं भ्रातृनन्याँश्च पार्थिवान् ।
स्थितो निदेशे ज्ञातीनां योक्ष्ये तत् समुदाहरन् ॥

विष्णुधर्मोत्तरअनुसार– धर्मको लक्षण वा धर्म हुने कर्म– यज्ञ, तपस्या, दान, दया, क्षमा, अहिंसा, सत्य, तीर्थ सेवा, स्वाध्याय, सत्सङ्ग, देवपूजा, गुरु-मातृ-पितृसेवा, ब्राह्मणसेवा, इन्द्रियनिग्रह, ब्रह्मचर्य, अमात्सर्य, गङ्गास्नान, हरिहरपूजन, नारायणध्यान र आत्मचिन्तन मानिएका छन् ।

तस्य द्वाराणि यजनं तपो दानं दया क्षमा ।
हिंसा त्यागस्तथा सत्यं तीर्थानुसरणं शुभम् ॥
स्वाध्यायसेवा साधूनां सहवासः सुरार्चनम् ।
गुरुणां चैव शुश्रूषा ब्राह्मणानां च पूजनम् ॥
इन्द्रियाणां जयश्चैव ब्रह्मचर्यममत्सरम् ।
गङ्गास्नानं हरिहराभ्यर्चनं स्वात्मचिन्तनम् ॥
ध्यानं नारायणस्यैतत् संक्षेपाद्धर्मलक्षणम् ॥

मनुस्मृतिअनुसार– धर्मको लक्षण दुनियाँलाई सुरक्षित राख्ने अर्थात् यो लोक परलोक दुवै सपारिदिने कर्मलाई धर्म भनिन्छ । धर्मद्वारा नै प्रजाको रक्षा हुन्छ । धारणाद्धर्म इत्याहुर्धर्मो धारयते प्रजाः (मनुः) ।

विज्ञानेश्वरको मतमा धर्म छ थरि छन्– वर्णधर्म– ब्राह्मणले कहिल्यै रक्सी नपिओस्– ब्राह्मणो नित्यं मद्यं वर्जयेत् इत्यादि । आश्रमधर्म– आश्रमअनुसार अग्निहोत्र समिधा फल खोज्नु र भिक्षा माग्नु । अग्नीन्धनभैक्षचर्यादिः । वर्णाश्रमधर्म–

पलाशको दण्ड ब्राह्मणले मात्र लिनु– पालाशदण्डो ब्राह्मणस्यैव । गुणधर्म– राज्याभिषेक आदिको गुण भएको राजाले प्रजापालन गर्नु– शास्त्रीयाभिषेकादिगुणयुक्तस्य राज्ञः प्रजापालनादिः । निमित्तधर्म– शास्त्रले गर्नु भनेको कर्म नगर्दा र नगर्नु भनेको कर्म गर्दा गरिने प्रायश्चित– विहिताचरणप्रतिषिद्धसेवननिमित्तं प्रायश्चित्तम् । अहिंसा आदि साधारण धर्म हुन्– साधारणधर्मोऽहिंसादिः ।

यस्तै ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र, अन्त्यजहरूको साधारण धर्म तथा विशेष धर्म, गृहस्थ, ब्रह्मचारी, वानप्रस्थ, र संन्यासीहरूको धर्म, आपत्कालीन धर्म इत्यादि अनेक धर्म छन् ।

जय गुरुदेव !

---

# सनातन धर्म

अकृत्यं नैव कर्तव्यं प्राणत्यागेऽप्युपस्थिते ।
न च कृत्यं परित्याज्यमेष धर्मः सनातनः ॥

प्राण-त्याग अर्थात् चाहे मृत्यु नै सामु उपस्थित भए पनि अकृत्य 'गर्न अयोग्य' कर्म कहिले पनि गर्न हुँदैन र चाहे मृत्युको सामना नै गर्न परोस् तर 'गर्न योग्य' कर्म कहिल्यै पनि छोड्न हुँदैन, यसैलाई सनातन धर्म भनिन्छ ।

धर्म एव हतो हन्ति धर्मो रक्षति रक्षितः ।
तस्माद्धर्मो न हन्तव्यो मा नो धर्मो हतोऽवधीत् ॥

यदि धर्मलाई निरादर गर्‍यौँ भने धर्मले हामीलाई नै नष्ट गरिदिन्छ भने धर्मको रक्षा गर्नाले त्यही धर्मले नै हाम्रो रक्षा गर्दछ । त्यसैले धर्मलाई कहिल्यै छोड्नु हुँदैन ।

धर्मो माता पिता चैव धर्मो बन्धुः सुहृत्तथा ।
धर्म स्वर्गस्य सोपानम् धर्मात्स्वर्गमवाप्यते ॥

धर्म नै हामी सबैको माता पिता हो र धर्म नै बन्धु तथा परम मित्र हो । धर्म नै स्वर्गको सिँढी हो जसमा चढेर नै हामीले स्वर्ग एवं सुख प्राप्त गर्न सक्दछौँ ।

धर्मादर्थः प्रभवति धर्मात्प्रभवते सुखम् ।
धर्मेण लभते सर्व धर्मसारमिदं जगत् ॥

धर्मबाट अर्थ उत्पन्न हुन्छ, धर्मबाट सुख उत्पन्न हुन्छ, धर्मबाट सबैथोक प्राप्त गर्न सकिन्छ र धर्म नै जगत् को सार हो ।

अजरामरवत्प्राज्ञो विद्यामर्थञ्च चिन्तयेत् ।
गृहीत इव केशेषु मृत्युना धर्ममाचरेत् ॥

बुद्धिमान् मनुष्यले आफूलाई अजर अमर ठानेर विद्या र अर्थको चिन्तन गरुन् तर धर्मको पालन गर्ने समयमा यो विचार गरुन् कि मृत्युले मेरो केश समातिरहेको छ अर्थात् सर्वदा मृत्युको भय राख्दै धर्मको आचरण गर्नुपर्दछ ।

# 'धर्म'

**–धर्म कुनै जड होइन, मानिसको समूहलाई पनि धर्म भनिदैन।**

**–'धारयति स धर्म'– तिमीले जे धारण गर्दछौ त्यही धर्म हो। तिमीले हृदयमा गुरुलाई धारण गर्दछौ भने गुरु नै तिम्रो धर्म बन्नुहुन्छ।**

**–किनकि धर्म मृत हुँदैन। कुनै विशेष 'वाद'को चट्टानमाथि धुँदै रहनाले मात्र कपडा उज्यालो हुँदैन, केवल 'हिन्दु' वा 'मुस्लिम' शब्दलाई उठ्दा-बस्दा जप्नाले पनि धर्मको चिन्तन हुन सक्दैन।**

**–जसमा प्राण तत्त्व छैन, जसमा रस छैन, जसमा चेतना छैन त्यो धर्म हुन सक्दैन। मुर्दाको समूहलाई धर्म मान्न सकिन्न, हिन्दुत्वको लाशलाई हरक्षण काँधमा बोक्दै रहनाले हिन्दुत्वको रक्षा हुन सक्दैन।**

**–धर्म एउटा गुण हो, एउटा सहज प्रवाह हो, एउटा खिलखिलाहट हो, एउटा मुस्कुराहट हो, एउटा जीवन्तता र चेतना हो... र यस्तै नै गुरु हुनुहुन्छ।**

**–यसैले त 'गुरौ एव धर्मः' भनिएको हो।**

**- परमपूज्य सद्गुरुदेव**

# गुरू पादुका पूजन

सर्वप्रथम शुद्ध पवित्र भई, शुद्ध वस्त्र धारण गरी शारीरिकरूपले स्वच्छ भएपछि मानसिकरूपले स्वस्थ हुनको लागि तीनपटक लामो स्वरमा 'ॐकार'को ध्वनि उच्चारण गर्नुहोस्। यसपछि हात जोडेर निम्न मंत्रबाट प्रार्थना गर्नुहोस्।

**ॐकारेश्वराय नमः, मम शान्ति त्वां स्वच्छ प्राप्ति निमित्तं, मम मन वचन कर्मणा त्वां पूर्णतः शुद्ध, पवित्र, दिव्य, चैतन्य प्राप्ति निमित्तं, मम समस्त शरीरे सतां पूर्वा एतोऽस्मानं मस्तिष्क रूपेण, नख, शिख पर्यन्तं पादयोः, पूर्णतः शुद्ध, सात्विक, पवित्र, चैतन्य, दिव्य त्वां तुभ्यं संपर्ददे।**

**गुरू स्थापन**

परमपूज्य सद्गुरुदेवहरूलाई हृदयमा विराजमान हुनुहोस् भनी हात जोडेर प्रार्थना गरौं।

**गुरुर्ब्रह्मा गुरुर्विष्णुः गुरुर्देवो महेश्वरः**
**गुरुः साक्षात् पर ब्रह्म तस्मै श्री गुरवे नमः ॥**
**ध्यान मूलं गुरो र्मूर्तिः पूजा मूलं गुरोः पदम्।**
**मंत्र मूलं गुरुर्वाक्यं मोक्ष मूलं गुरोः कृपा ॥**
**मूकं करोति वाचालं पंगुं लंघयते गिरिं।**
**यत् कृपा तमहं वन्दे परमानन्द माधवम् ॥**

**श्री गुरु चरणकमलेभ्यो नमः प्रार्थनां समर्पयामि। श्री गुरुं मम हृदये आवाहयामि मम हृदय कमलमध्ये स्थापयामि नमः। तत्रादौ आसनं त्वां पूर्वत ऐतोऽस्मानं गुरु पादुकां स्थापयामि नमः।**

परमपूज्य सद्गुरुदेवहरूलाई आसनको लागि पुष्पदल (केसरा छुटाएर) अर्पण गर्नुहोस् तथा तीन आचमनी जल चढाउनुहोस्।

**पाद्य**

**ॐ पाद्यं ते पूर्वाहं सतामहं स कृते एतोऽस्मानं स पूर्वाः तुभ्यं संपर्ददे। पाद्यं समर्पयामि नमः, पाद्यान्ते अर्घ्यं समर्पयामि नमः।**

**अर्घ्य**

कुंकुमादि गन्ध, पुष्प सहितको अर्घ्यजल समर्पित गर्नुहोस्।

**पाद्यान्ते कुंकुमपुष्पैः सह अर्घ्यं समर्पयामि नमः। तत्रादौ आदर सत्कार रूपेण गुरुम् आवाहयामि, अर्घ्यं समर्पयामि नमः।**

**आत्मशुद्धि**

आत्म शुद्धिको लागि दायाँ हातमा जल लिएर निम्न मंत्रोच्चारण गर्दै तीनपटक जल पिउनुहोस्।

**ॐ नारायणाय नमः। ॐ केशवाय नमः। ॐ गोविन्दाय नमः।**

यसपछि हात धुनुहोस्।

## पादुका स्थापन

गुरु पादुका स्थापनापश्चात् फूलको आसन अर्पण गरौँ ।

**एतोऽस्मानं सः तां पूर्वाह एतोऽस्मानम् पूर्ण मन, वचन, कर्मणा पादयोः पादुकां स्थापयामि नमः ।**

**गुरु पादुकां स्थापयामि नमः ।**

## संकल्प

दाहिने हातमा जल, फूल र कुंकुमादि गन्ध लिएर संकल्प गर्नुहोस् ।

**ॐ विष्णु र्विष्णु र्विष्णुः श्रीमद्भगवतो महापुरुषस्य विष्णोराज्ञया प्रवर्तमानस्य अद्य श्री ब्रह्मणोऽह्नि द्वितीयपरार्धे श्वेत वाराहकल्पे जम्बू द्वीपे मम मन वचन कर्मणां पूर्णता प्राप्ता निमित्तं गुरु पूजनान्ते तेषां महालक्ष्मीं आवाहयामि येषां स कृते कल्याण त्वां एतोऽस्मानं धन धान्य यश प्रतिष्ठा ऐश्वर्य अभिवृद्धये मम पूर्णतः पदोन्नति प्राप्ताय निमित्तं सर्व सुख प्राप्ति निमित्तं आध्यात्मिक उन्नति प्राप्ताय निमित्तं सिद्धाश्रम ऋषि मुनि आशीर्वाद प्राप्ताय निमित्तं मम मन वचन कर्मणां पूर्णतः गुरु चरणारविन्दं समर्पयामि । त्वां एतोऽस्मानं सा तव चरणे मम अमुक गोत्रोत्पन्नोऽहं** (आफ्नो गोत्रको उच्चारण गर्नुहोस्) **अमुक शर्माऽहं** (आफ्नो नाम उच्चारण गर्नुहोस्) **गुरु चरणारविन्दे जल साक्षीरूपेण समर्पयामि नमः ।**

जल भूमिमा छोडिदिनुहोस् र पुनः हात जोड्नुहोस् ।

## आवाहन प्रार्थना

**गुरुर्वै सदान्यं परमं पवित्रं ब्रह्मस्वरूपं चैतन्य रूपम् ।**
**रुद्र स्वरूपाय विष्णुर्वदान्यै गुरुपादुकायां परिपूजयामि ॥**
**त्वं ब्रह्म रूपं त्वं देव रूपं आशीर्वादं भवतं सदैवं ।**
**क्रियमाण रूपं मम कार्य सिद्धिं गुरुपादुकां परिपूजयामि ॥**
**देवज्ञ चैतन्य भगवत् स्वरूपं सर्वत्र कार्यं विजयं भवेच्च ।**
**आशीर्वादं पूर्वत एव नित्यं गुरुपादुकायां भवतं प्रणामि ॥**
**सिद्धाश्रमोऽयं ऋषितुल्य देवं मम साधयेत त्वं गुरुत्वं सदैव ।**
**परमं गुरु परमात्मरूपं गुरुश्च गुरुपादुकायां भवतं प्रणामि ॥**
**आवाहयामि ऋषिमुनि सिद्धाश्रम च आवाहयामि ।**
**सर्वत्र देवं दैवञ्च रूपं आवाहयामि गुरु पादुकानि ॥**

**तत्रादौ समस्त ऋषि मुनि सिद्ध गंधर्व यक्ष किन्नर पूर्णतः सिद्धाश्रम स्थित परम गुरु परमात्म गुरु, पारमेष्ठि गुरु, परमपरमात्म गुरु, श्री सच्चिदानन्द सहिताय समस्त ऋषि मुनि आवाहयामि मम अमुक गोत्रोत्पन्नोऽहं** (आफ्नो गोत्र उच्चारण गर्नुहोस्, गोत्र थाहा नभए जाति उच्चारण गर्नुहोस्) **अमुक शर्माहं** (आफ्नो नाम उच्चारण गर्नुहोस्) **मम पूर्ण मन वचन कर्मणां शुद्धाय निमित्तं त्वां गुरु चरणारविन्दे मम गुरु श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज तेषां चरणपादुकां पूजयामि नमः ।**

तीनपटक जलद्वारा (आचमनीमा जल लिएर) प्रदक्षिणा गरी जल भूमिमा छोडिदिनुहोस् । हातमा पुष्प लिएर गुरुदेवहरूलाई आह्वान गर्दै यो भावना लिऔँ कि समस्त दिक्-दिगन्त पूर्व पश्चिम, उत्तर, दक्षिण, यम, अग्नि, ईशान, वायव्य, नैऋत्य, अन्तरिक्ष र पाताल दशै दिशामा जति पनि देवीदेवता हुनुहुन्छ, उहाँहरू सम्पूर्ण उपस्थित भएर हामीलाई आशीर्वाद प्रदान गरिदिनुहोस् । जसबाट हामीले मन, वचन, कर्मबाट नै पवित्र हुन सकौँ, समर्पित हुन सकौँ र हजूरहरूको आशीर्वाद प्राप्त गरी सम्पूर्ण मनोकामना पूरा भई उचाईमा उठ्न सकौँ । यसै उद्देश्यका साथ हामीले हजूरहरूको श्रीचणकमलमा यी पुष्प अर्पण गरेका छौँ ।

**त्वां पूर्णेहं स्वाहा सदा भवन्यै भवतां सः हृदयं**
**सदैव पूर्वां सह क्रियते कल्याण त्वां दीर्घं हः ।**
**गुरुचरणारविन्दे त्वां पादुकायां पुष्पं समर्पयामि नमः ।**

फूलको रूपमा हाम्रो हृदय नै हजूरको चरणमा अर्पित गर्दछौँ ।

## गणपति पूजन

दुवै हात जोडेर गणपति भगवान्को स्मरण गर्नुहोस् ।

**सुमुखश्चैकदन्तश्च कपिलो गजकर्णकः ।**
**लम्बोदरश्च विकटो विघ्ननाशो विनायकः ॥**
**धूम्रकेतुर्गणाध्यक्षो भालचन्द्रो गजाननः ।**
**द्वादशै तानि नामानि यः पठेच्छृणुयादपि ॥**
**विद्यारम्भे विवाहे च प्रवेशे निर्गमे तथा ।**
**संग्रामे संकटे चैव विघ्नस्तस्य न जायते ॥**
**शुक्लाम्बर धरं देवं शशिवर्णं चतुर्भुजं ।**
**प्रसन्न वदनं ध्यायेत् सर्व विघ्नोपशान्तये ॥**
**लाभस्तेषां जयस्तेषां कुतस्तेषां पराजयः ।**
**येषा मिन्दीवर श्यामो हृदयस्थो जनार्दनः ॥**
**अभीप्सितार्थ सिद्ध्यर्थं पूजितो यः सुरासुरैः ।**
**सर्व विघ्न हरस्तमै गणाधिपतये नमः ॥**
**सर्व मंगल मांगल्ये शिवे सर्वार्थ साधिके ।**
**शरण्ये त्र्यम्बके गौरि नारायणि नमोऽस्तुते ॥**
**सर्वदा सर्व कार्येषु नास्ति तेषांममंगलम् ।**
**येषां हृदिस्थो भगवान् मंगलायतनो हरिः ॥**
**तदेव लग्नं सुदिनं तदैव तारा बलं चन्द्र बलं तदैव ।**
**विद्या बलं दैव बलं तदैव लक्ष्मीपतेस्तेंघ्रियुगस्मरामि ॥**
**यत्र योगेश्वर कृष्णः यत्र पार्थो धनुर्धरः ।**
**तत्र श्री विजयो भूति र्ध्रुवानीति मतिर्मम ॥**
**सर्वेष्वारंभ कार्येषु त्रयस्त्रिभुवनेश्वराः ।**
**देवाः दिशन्तु नः सिद्धिं ब्रह्मेशान महेश्वराः ॥**
**वक्रतुण्ड महाकाय सूर्य कोटि समप्रभः ।**

**निर्विघ्नं कुरु मे देव सर्वकार्येषु सिद्धिदा ॥**
**ऋद्धि, सिद्धि सहितं महागणपतिं**
**आवाहयामि स्थापयामि नमः ।**

**स्नान**

भगवान् गणपतिलाई तीनपटक आचमनी जलले स्नान गराउनुहोस् ।

**ॐ वरुणास्योस्तम्भनमसि वरुणास्यस्कुम्भ सर्जनीस्थो वरुणस्य ऋत सदनमसि वरुणस्य ऋत सदन्यसि वरुणस्य ऋतसदनमासीत् ।**

तीनपटक आचमनीबाट फेरि जल अर्पण गरौँ ।

**तत्रादौ एतोऽस्मानं पंचामृत स्नानं कुर्यात् ।**

**पंचामृत स्नान**

दूध, दही, घिउ, शख्खर र मह मिलाएर बनाएको पञ्चामृत्बाट स्नान गराउनुहोस् ।

**पयो दधि घृतं मधु च शर्करा युतं पंचामृत देव्यो स्नानार्थम् ॐ पंचोवृतं सरस्वती घट वरो सरस्वती च धारार्थ देवं च भव सहितं दुग्ध, दधि, घृतं, मधु शर्करां तां पंचामृत रूपेण पंचामृत स्नानं समर्पयामि नमः ।**

**तत्रादौ पुनः शुद्धोदक स्नानं समर्पयामि नमः ।**

**स्नान** (पुनः जलले गणपति भगवान्लाई स्नान गर्नुहोस् ।)

**ॐ शुद्धवालः सर्वशुद्धवालो मणिवालस्तऽआस्विनाः श्वेतः श्वेताक्षोऽरुणस्ते रुद्राय पशुपतये कर्णायामा अपलिप्ता रौद्रा नभोरूपा पार्जन्याः पुष्पेण प्रक्षालयामि नमः ।**

भगवान् गणपतिलाई फूलले पुछिसकेपछि कुंकुमको तिलक लगाइदिनुहोस् ।

**तिलक**

**ॐ नमोऽस्त्वनंताय सहस्त्रमूर्तये सहस्त्रापादाक्षिशिरोरु बाहवे सहस्त्रनाम्ने पुरुषाय शाश्वते सहस्त्रकोटि युगधारिणे नमः । उद्भावेण नमः कुंकुमेन तिलकं कृत्वा ।**

**अक्षता** (अक्षता चढाउनुहोस् ।)

**ॐ अक्षन्नमीमदन्त ह्यवप्रिया अधूषत । अस्तोषत स्वभानवो विप्रा नविष्ठया मतीः योजानविन्दते हरी । अक्षतान्ते पुष्पाणि समर्पयामि नमः ।**

**पुष्प** (दुवै हातमा फूल लिएर चढाउनुहोस् ।)

**सुमाल्यानि सुगन्धीनि मालत्यादीनि वै प्रभो । मया नीतानि पुष्पाणि पूजार्थं प्रतिगृह्यताम् ॥ पुष्पाणि समर्पयामि नमः, पुष्पान्ते दीपं दर्शयामि नमः ।**

**दीपक पूजन** (दीपकलाई कुंकुमादि सम्पूर्ण गन्धाक्षताबाट पूजा गर्नुहोस् ।)

**ॐ आह्वं सर्व ददयोति तां विधं तं पूजा योगस्य धारण सरस्वती च अधिष्ठात्री धूपं आघ्रापयामि, दीपं दर्शयामि नमः । भो ! दीप सूर्य रूपत्वं अन्धकार निवारक यावत् कर्म समाप्तिः स्यात् तावतत्वं सुस्थिरो भव ।**

**शिखा बन्धन**

शिखा नहुनेले शिरमा दाहिने हात राख्ने र हुनेले शिखा बन्धन गरौँ ।

**ॐ मानस्तोके तनये मान आयुषि मानो गोषु मानो अश्वेषुरीरिषः ! मा नो वीरान् रुद्र भामिनो वधी हविष्मन्तः सदमित्वा हवामहे ।**

**तत्रादौ शिखा बन्धनम्, शिखाबन्धनान्ते तिलकं कृत्वा ।**

**तिलक**

बायाँ हातमा थोरै चन्दन लिएर दायाँ हातको साहिँली औँलाले आफैलाई तिलक लगाउनुहोस् ।

**ॐ स्वस्ति न इन्द्रो वृद्धश्रवाः । स्वस्ति नः पूषा विश्व वेदाः । स्वस्तिनस्ताक्ष्र्यो अरिष्टनेमिः । स्वस्तिनो बृहस्पतिर्दधातु ।**
**तत्रादौ स्वहस्तेन तिलकं कृत्वा ।**

**हस्त प्रक्षालनम्** । (हात धुनुहोस् ।)

**पुष्प** (गुरु पादुकामा फूल अर्पण गर्नुहोस् ।)

**ॐ पुष्पेण प्रोक्षयामि सः पूर्ण परिवार सहितं पत्नी पुत्र बन्धु बान्धव स कुटुम्ब सहितं समस्त परिवार सहितं त्वां पूजयामि, प्रारम्भिक क्रमेण पुष्पाणि त्वाम् समर्पयेत् ।**
**तत्रादौ एतोऽस्मानं स कृते स्नानं कुर्यात्**

**जल स्नान** (पादुकालाई जलले स्नान गराउनुहोस् ।)

**ॐ वरुणास्योस्तंभनमसि वरुणस्य स्कम्भसर्जनीस्थो वरुणस्य ऋत सदन्यसि वरुणस्य ऋत सदनमसि वरुणस्य ऋत सदनमासीत् । भो ! वरुणं आवाहयामि कल्पवृक्षस्य मूले शिव समाहित मूले च त्वं स्थितो ब्रह्मा मध्ये च मातृ मध्ये सुखतो तां स तुभ्यं सम्पर्ददे ।**

**कलश पूजन**

कलशको चारैतिर कुंकुमले टीका लगाइसकिएको छ । चारैतिर फूल, अबीर, अक्षताले पूजा गर्नुहोस् ।

**पूर्वे ऋग्वेदाय नमः, पश्चिमे यजुर्वेदाय नमः, उत्तरे सामवेदाय नमः, दक्षिणे अथर्ववेदाय नमः । चतुर्वेदं आवाहयामि स्थापयामि नमः । कलश समस्तं भूलोक, सर्वलोक, ब्रह्मलोक तां सप्त लोकस्य प्रतीक रूपेण स कलशं स्थापयेत् ।**

कलशमा तीन आचमनी जल अर्पण गरौँ ।

**सर्वे समुद्राः सरितस्तीर्थानि जलदा नदाः । आयान्तु देव पूजार्थं दुरितक्षयकारकाः ॥**

यसपछि कलशमा सुपारी हाल्नुहोस् ।

**सुवाहितां स पूर्वा पुंगीफलं महाविद्या नाग पुष्प च ताम्बूलं तां सर्वान् संस्कार रूपेण कलशे स्थापयामि नमः ।**
**तत्रादौ कलशे कुंकुमं स्थापयामि नमः ।**

निम्न मन्त्रोच्चारण गर्दै कलशभित्र कुंकुमादि सम्पूर्ण गन्ध, अक्षताहरू अर्पण गर्नुहोस् ।

**कुंकुमेण स गन्धः एतोऽस्मानं तां पूजय तुभ्यं, इदमस्तु पूर्वे ज्योति पूजनं कलशे स्थापयामि नमः ।**

**तत्रादौ नारिकेलं कलशे स्थापयामि ।**

## नरिवल स्थापन

कलशमाथि नरिवल स्थापित गर्नुहोस् । नरिवललाई वस्त्रले बाँधेको हुनुपर्दछ ।

**तत्रादौ पूर्णत्व प्राप्ताय निमित्तं तां नारिकेलं फलं तत्र स्थापयेत् ।**

## कलश स्थापन

यसपछि कलशमा हातले छोएर प्रार्थना गर्नुहोस् ।

**कलशस्य मुखे विष्णुः कंठे रुद्रः समाहितः**
**मूले तस्य स्थितो ब्रह्मा मध्ये मातृ गणः स्थितः**
**कुक्षौ तु सागरा सर्वे सप्तदीपा वसुन्धरा**
**ऋग्वेदो, यजुर्वेदः, सामवेदो अथर्ववेदः**
**अंगैश्च सहिता सर्वे कलशन्तु समाहिताः ।**
**सर्वे समुद्रा सरितस्तीर्थानि जलदाः नदाः**
**आयान्तु मम शान्त्यर्थं दुरितक्षय कारकाः ।**
**मातृ देवो भव, पितृ देवो भव, आचार्य देवो भव,**
**अतिथि देवो भव, सर्व देवेभ्यो नमो नमः ।**

## पवित्रीकरण

कलशभित्रको जल झिकेर पवित्रीकरणको पात्रमा हाल्नुहोस् र पवित्रीकरण गर्नुहोस् ।

ॐ **अपवित्रः पवित्रो वा सर्वावस्थां गतोऽपिवा**
**यः स्मरेत् पुण्डरीकाक्षं सः बाह्याभ्यान्तरः शुचिः ।**
**पुण्डरीकाक्षाय नमः ।**

कलशमा तीन आचमनी जल हाल्नुहोस् ।

**गंगा जलं आवाहयामी स्थापयामि नमः।**
**यमुना जलं आवाहयामी स्थापयामि नमः ।**
**सर्वान् समुद्रान् आवाहयामी स्थापयामि नमः ।**

## जल स्नान

कलशको जलबाट पादुकालाई स्नान गराउनुहोस् ।

ॐ **वरुणस्यो वर्णभाति वरुणस्यो ऋतसदृश वरुणस्य मां वरुणस्था सदृशं आसीत् । स्नानं समर्पयामि नमः ।** ॐ **वरुणस्योत्तम्भनमसि वरुणस्य स्कम्भ सर्जनीस्थो वरुणस्य ऋत सदन्यसि वरुणस्य ऋतसदनमसि वरुणस्य ऋत सदनमासीत् ।**

**दुग्ध स्नान** (दूधले पादुकामा स्नान गराउनुहोस्)

ॐ **पयः पृथिव्यां पय ओषधीषु पयो दिव्यन्तरिक्षे पयोधाः पयस्वतीः प्रदिशः सन्तु मह्यम् ।**

आचमनीले तीनपटक जल अर्पण गरौं ।

**पुनः शुद्धोदक स्नानं समर्पयामि नमः ।**

**दधि स्नान** (दहीले पादुकामा स्नान गराउनुहोस्)

ॐ **दधि क्राव्णो अकारिषं जिष्णोरश्वस्य वाजिनः ।**
**सुरभि नो मुखारकत् प्रण आयू (गूं) षि तारिषत् ॥**

दहीबाट स्नान गराइसकेपछि फेरि जलबाट स्नान गराऔं ।

ॐ **सर्व शुद्धवालः च शुद्धोदक स्नानं समर्पयामि नमः ।**
**तत्रादौ घृत स्नानं कुर्यात् ।**

**घृत स्नान** (घिउले पादुकामा स्नान गराउनुहोस्)

ॐ **घृतं मिमिक्षे घृतमस्य योनिर्घृते श्रितो घृतमस्य धाम अनुष्वधमावह मादयस्व स्वाहाकृतं वृक्षभवक्षिहव्यम् । घृतं स्नानं समर्पयामि नमः ।**

**घृत स्नानान्ते तत्रादौ शुद्धोदक स्नानं कुर्यात् ।**

**शुद्धोदक स्नान** (पुनः शुद्ध जलबाट स्नान गराऔं ।)

ॐ **शुद्धवालः सर्वशुद्ध वालो मणिवालस्त आश्विनाः श्वेतः श्वेताक्षोऽरुणस्ते रुद्राय पशुपतये कर्णायामा अवलिप्ता रौद्रा नभोरूपा पार्जन्याः । तत्रादौ मधु स्नानं समर्पयामि नमः ।**

**मधु स्नान** (महले पादुकामा स्नान गराउनुहोस्)

ॐ **मधुव्वाता ऋतायते मधुक्षरन्ति सिन्धवः माध्वीर्नः सन्त्वोषधीः । मधुनक्तमुतोष सो मधुमत पार्थव (गूं) रजः । मधु द्यौरस्तु नः पिता मधुमान्नो वनस्पतिः मधुमानस्तु सूर्यः माध्वी र्गावो भवन्तुनः । मधु स्नानं समर्पयामि नमः । पुनः शुद्धोदक स्नानं कुर्यात् ।**

(पुनः शुद्ध जलबाट स्नान गराऔं ।)

**तत्रादौ शर्करा स्नानं कुर्यात् ।**

## शर्करा स्नान

(सख्खरले पादुकामा स्नान गराउनुहोस्)) ।

ॐ **सविस्ते निखन्दे निवसितो गुं शतः स गणेन संऋषि सोम पेन च न हवि पतिं पा । तत्रादौ शर्करा स्नानं समर्पयामि नमः ।**

**पुनः शुद्धोदक स्नानं कुर्यात् ।** (पुनः शुद्ध जलबाट स्नान गराऔं ।)

**गंगाजल स्नान** (गंगाजलले स्नान गराउनुहोस् ।)

ॐ **गंगे च यमुने चैव गोदावरी सरस्वती**
**नर्मदे सिन्धु कावेरी जलेऽस्मिन् सन्निधिं कुरु**
**ब्रह्माण्डोदर तीर्थानि करे पृष्टानि ते रवे**
**तेन सत्येन मे देव तीर्थं देहि दिवाकरः ।**

शुद्ध जलले पादुकाको पूर्ण गराउनुहोस् ।

**पूर्ण स्नानं कुर्यात् ।**

## पादुका स्थापन

अब गुरु पादुकालाई राम्रोसँग पुछ्नुहोस् र पहिलेको थालीलाई हटाएर नयाँ थालीमा स्वस्तिक चिह्न बनाई फूल ओछ्याएर

त्यसमाथि पादुकालाई स्थापित गर्नुहोस् ।

**आसनम् समर्पयामि नमः ।**

**ॐ सः पूर्वो एतोऽस्मानं सः कृते दीर्घौ गुरु पादुकां आसनं समर्पयामि नमः । आसनान्ते अंगुष्ठरूपेण तिलकं कुर्यात् ।**

**तिलक** (चन्दनको तिलक अर्पण गर्नुहोस् ।)

**ॐ नमो स्त्वनन्ताय सहस्त्रमूर्तये सहस्त्र पादाक्षिषिरोरुबाहवे सहस्त्र नाम्ने पुरुषाय शाश्वते सहस्त्र कोटि युग धारिणे नमः।**

**तत्रादौ कुंकुमं विलेप्य ।**

**कुंकुम**

पादुकामा कुंकुमले तिलक लगाइदिनुहोस् ।

**कुंकुमान पूर्वा एतोऽस्मानं सौभाग्यं द्रव्यं समर्पयामि नमः ।**

(सौभाग्य चढाउनुहोस्)

**सौभाग्यं लभ्यते एतोऽस्मानं तिलकं कृत्वा अक्षतान् समर्पयामि नमः ।**

(अक्षता चढाउनुहोस्)

**ॐ अक्षन्नमी मदन्त ह्य प्रिया अधूषत अस्तोषत स्वभानवो विप्रा न विष्ठयो मती योजान् विन्दते हरी ।**

**तत्रादौ एतोऽस्मानं सुगन्ध द्रव्यं समर्पयामि नमः ।**

**सुगन्धित द्रव्य** (सुगन्धित द्रव्य अर्थात् अत्तर वा सेन्ट चढाउनुहोस्)

**सौभाग्यं द्रव्यं समर्पयामि नमः ।**

**तत्रादौ पुनः अक्षतं समर्पयामि नमः ।**

(पुनः अक्षता चढाउनुहोस्)

**ॐ अक्षन्नमी मदन्त दुतिमदन्त । भूति पूर्णत्व प्राप्ता निमित्तं । अक्षतान्ते पूर्णाः ।**

**यज्ञोपवीत** (हातमा यज्ञोपवीत अर्थात् जनै लिनुहोस् ।)

**यज्ञोपवीत इति सुतलं छन्दः यज्ञोपवीत धारणे विनियोगः-**

**यज्ञोपवीतं परमं पवित्रं प्रजापते यत् सहजं पुरस्तात्,**
**आयुष्यमग्रचं प्रतिमुंच शुभ्रं यज्ञोपवीतं बलमस्तु तेजः।**
**तेनत्वां प्रतिगृह्यामि, यज्ञोपवीतं प्रजापत्यं सहितं पुरुष**
**आयुष्यं मन वचन प्रति शुद्धं यज्ञोपवीतं बलस्य वीर्य**
**प्रथयामि तत्रादौ यज्ञोपवीतान्ते पुनः तिलकं कृत्वा ।**

(यज्ञोपवीत चढाउनुहोस् र कुंकुमले तिलक लगाइदिनुहोस् ।)

**ॐ स्वस्ति न इन्द्रो वृद्धश्रवाः । स्वस्ति न पूषा विश्व वेदाः स्वस्ति नस्ताक्ष्यो अरिष्टनेमिः । स्वस्तिनो बृहस्पतिर्दधातु । तत्रादौ कुंकुमेन तिलकं कृत्वा । तत्रादौ एतोऽस्मानं वस्त्रं समर्पयामि नमः ।**

**वस्त्र** (वस्त्र चढाउनुहोस्)

**ॐ युवा सुवासा परिवीत आगात् स उश्रेयान् भवति जायमानः तं धीरासः कवयः उन्नयन्ति साध्यो मन सः देवयन्तः । वस्त्रं समर्पयामि नमः । वस्त्रान्ते पुण्य फल प्राप्ति निमित्तं दक्षिणां द्रव्यं समर्पयामि नमः ।**

**नैवेद्य** (नैवेद्य अर्थात् पकाएको प्रसाद चढाउनुहोस्)

**स इखित्वा ईखित्वोर्णत्वा स पूर्वा लिंगोवतां देवता स दीर्घोवतां, नैवेद्यं समर्पयामि नमः । ॐ नाभ्या आसीदन्तरिक्ष (गूं) शीर्ष्णो द्यौः समवर्तत पद्भ्यां भूमिर्दिशः श्रोत्रां स्तथा लोकान् अकल्पयान् ।**

**आचमन**

यसपछि चढाइएका नैवेद्यको चारैतिर जलले प्रदक्षिणा गरिदिनुहोस् ।

**ॐ प्राणाय स्वाहा । ॐ अपानाय स्वाहा । ॐ व्यानाय स्वाहा । ॐ उदानाय स्वाहा । ॐ समानाय स्वाहा । ॐ भक्ष्य भोज्य धेनु मुद्रां मत्स्य मुद्रां च प्रदर्शय । पूर्णता प्राप्ति निमित्तं नैवेद्यं समर्पयामि नमः । नैवेद्यान्ते फलं समर्पयामि नमः ।**

**फल** (मौसमअनुसारको फलफूल अर्पण गर्नुहोस्)

**इदं फलं मया देव स्थापितं पुरतस्तव । तेन मे सफलावाप्तिः भवेज्जन्मनि जन्मनि ॥ फलानि समर्पयामि नमः । फलान्ते स कृते एतोऽस्मानं स पूर्णत्वं पूर्णं नारिकेलं एतोऽस्मानं पूर्ण विविध फलानि समर्पयामि नमः । तत्रादौ त्वं पूर्णत्वाम् फलानि समर्पयामि नमः ।**

यसका अतिरिक्त पनि कुनै फलफूलहरू बाँकी छन् भने अर्पण गरिदिनुहोस् ।

**ताम्बूल** (पान चढाउनुहोस् ।)

**फलान्ते ताम्बूलं समर्पयामि नमः । तत्रादौ पुनः एतोऽस्मानं नैवेद्यं समर्पयामि नमः । कलशात् नारिकेलं गृहणीयात् ।**

**नरिवल**

कलशमाथिको नरिवललाई दुवै हातमा उठाउनुहोस् ।

**यत्रा ते धृतस्य धृता ते धारणे विनियोगः धी ब्रह्मर धृता वचना यत्रास्व यत्रा भर्गो देवानां दक्षिणाये सागरस्य महालक्ष्म्यै सम्पूर्णयते सप्रभावान् जपा मम त्वां अमुक गोत्रोत्पन्नोऽहं** (आफ्नो गोत्र) **अमुक शर्माऽहं** (आफ्नो नाम) **त्वां पूर्ण बल बुद्धि विद्या पूर्णत्वं त्वां चरणे नारिकेल फल गृह्णाति त्वां चरणे समर्पयामि नमः ।**

(म आफ्ना बल, बुद्धि, समस्त शरीर हजूरको चरणमा यस नरिवलको रूपमा समर्पित गर्दछु ।)

**गुरु स्मरण** (हात जोडेर प्रार्थना गरौं ।)

**गुरुर्वै सदाहं भवतं भव सदैव ऐता सदैवं ।**
**सदा प्रसन्नार्थ रूपं सदैवं सदैवं यत्र रूप मेव ॥**
**कृपात्र भवेत त्वां त्रिभुवनमेव सिन्धु सदाहं ।**
**शरण्यं गतं वै शरण्यं प्रसन्नार्थ भवेत तम् ॥**

**आवाहनं त्वमेवं शरण्यं प्रवृत्ति आशीर्वाद**
**भवेतं त्वमेव रूपा पूर्ण मदैव नित्यं ॥**
**भवेतां नित्यं सुदीर्घ नित्यं चिन्त्यं विचिन्यं**
**त्वां चरणारविन्दे मम मस्तक त्वां समर्पयामि ॥**
गुरु पादुकामा शिर झुकाएर प्रणाम गरौँ ।

## दिक् पूजन

कुंकुमादी गन्धाक्षताबाट दशै दिशामा तिलक गर्नुहोस् ।
**पूर्वे इन्द्राय नमः । श्री इन्द्रं स्थापयामि नमः ।**
**दक्षिणे यमाय नमः । श्री यमं स्थापयामि नमः ।**
**पश्चिमे वरुणाय नमः । श्री वरुणं स्थापयामि नमः ।**
**उत्तरे कुबेराय नमः । श्री कुबेरं स्थापयामि नमः ।**
उत्तरतिर चढाउँदै जानुहोस् ।
**उत्तरे अन्तरिक्षं स्थापयामि । विष्णुर्विष्णुं स्थापयामि वास्तु देवतां स्थापयामि, दश दिक्पाल समस्त दिग् देवता यक्ष, गन्धर्व, किन्नर कुलं समस्तं स्थापयामि पूजयामि नमः ।**
हातमा जल लिएर भूमिमा छोडिदिनुहोस् ।
**तत्रादौ पुष्पार्घ्यं समर्पयामि नमः ।**

**पुष्पमाला** (फूलको माला गुरु पादुकामा चढाउनुहोस् ।
**गुरुत्व त्वां पुष्पमाल्यरूपेण समस्तं शिष्येण समस्तं पुष्परूपेण त्वां किंचित रूपेण त्वां चरणे समर्पयामि नमः । पुष्पमालां समर्पयामि नमः । तत्रादौ गुरु पादुका पंचकं कुर्यात् ।**

## गुरू पादुका पंचक

(गुरु पादुका पञ्चकको सस्वर पाठ गरौँ)
**ॐ नमो गुरुभ्यो गुरु पादुकाभ्यो नमः परेभ्यः परपादुकाभ्यः आचार्य सिद्धेश्वर पादुकाभ्यो नमो नमः श्री गुरुपादुकाभ्यः ।**
**ऐंकार ह्रींकार रहस्ययुक्त श्रींकारगूढार्थ महाविभूत्या**
**ॐकार मर्म प्रतिपादिनीभ्यां नमो नमः श्री गुरुपादुकाभ्याम् ।**
**होत्राग्नि होत्राग्निहविष्यहोतृ होमादिसर्वाकृतिभासमानम्**
**यद् ब्रह्म तद्बोधवितारिणीभ्यां नमो नमः श्री गुरुपादुकाभ्याम् ।**
**कामादिसर्पब्रजगारुडाभ्यां विवेक वैराग्य निधिप्रदाभ्याम्**
**बोधप्रदाभ्यां द्रुतमोक्षदाभ्यां नमो नमः श्री गुरुपादुकाभ्याम् ।**
**अनन्त संसारसमुद्रतार नौकायिताभ्यां स्थिरभक्तिदाभ्याम्**
**जाड्याब्धिसंशोषणवाडवाभ्यां नमो नमः श्री गुरुपादुकाभ्याम् ।**
**तत्रादौ सिद्धाश्रम पूजनं कुर्यात् ।**

**सिद्धाश्रम पूजन** (हात जोडेर प्रार्थना गरौँ ।)
**सिद्धाश्रमस्थ समस्त ऋषि मुनि सिद्ध गन्धर्व, यक्षान् पूर्वा त्वां परम गुरु पारमेष्ठि गुरु पूर्ण रूपेण त्वं आवाहयामि मम पूर्णस्य त्वां चरणारविन्दे तुभ्यं सम्पर्ददे ।**

## स्थापन

आफ्नो हृदयमा स्थापित भइदिनका लागि दादा गुरुदेव स्वामी सच्चिदानन्दसँग प्रार्थना गर्नुहोस् ।
**गुरुत्वं सदैवं पूर्ण मदैव रूपं, साक्षात् परब्रह्म रूपं त्वमेवं । आवाहयामि मम पूजनार्थं तदैव रूपं; भगन्नमस्ते आवाहयामि स्थापयामि नमः ॥**

**पूजन** (पूजन गरौँ)
**तत्रादौ कुंकुमं समर्पयेत् ।**
कुंकुम चन्दन लगायतका गन्ध अर्पण गर्नुहोस् ।
**कुंकुमान्ते एतोऽस्मानं अक्षतान् समर्पयामि नमः ।**
अक्षता चढाउनुहोस् ।
**ॐ अक्षतान्ते पुष्पाणि समर्पयामि तां ते पूर्वाहं ते पुष्पं समर्पयामि नमः ।**
पुष्प अर्पण गर्नुहोस् ।
**पुष्पान्ते नाना सुगन्धानि सुगन्धमाले माला इत्यादि भुवयातं पूजार्थं पुष्पाणि ते पुष्पं समर्पयामि नमः।**
पुष्पमाला अर्पण गर्नुहोस् ।
**पुष्पान्ते धूपं दीपं दर्शयामि नमः ।**
धूप दीप अर्पण गर्नुहोस् ।
**दिपान्ते नैवेद्यं समर्पयामि नमः ।**
नैवेद्य अर्पण गरिदिनुहोस् ।
**नैवेद्यान्ते समस्त पुष्प पल्लवं ते धूप दीपं ते च आसनं पूर्वान्ते दीर्घो आसनाय पारमेष्ठि गुरुं आवाहयामि स्थापयामि नमः ।**
वस्त्रादि अन्य सम्पूर्ण चीज अर्पण गर्नुहोस् ।

## परमेष्ठि गुरू आवाहन

दुवै हातमा पुष्प लिएर प्रार्थना गर्नुहोस् ।
**तां पूर्वा ऐतोऽस्मानं परमेष्ठि गुरु स्वामी सच्चिदानन्द रूपेण आवाहयामि मम सिद्धाश्रमस्थ समस्त ऋषि मुनि गंधर्व किन्नर त्वां पूर्णत्व अप्सरा सहितं आवाहयामि समस्तं स्थापयामि नमः ।**
पुष्प चढाइदिनुहोस् र पुनःहात जोडेर प्रार्थना गर्नुहोस् ।
**पूर्वां पवित्रं तां मम समस्त सौख्य एतोऽस्मानं स कृते कल्याणं स मन वचन कर्मणा पवित्र, शुद्ध, सात्विक पूर्ण, समस्त दुःख दोष, दारिद्र्य निवारणार्थं, सुख, सौभाग्य, धन, धान्य, यश, प्रतिष्ठा, ऐश्वर्यं त्वां पूर्ण आशीर्वाद प्राप्तये निमित्तं त्वां पुष्प रूपेण मम हृदये रोम प्रतिरोम त्वां चरणारविन्दे समर्पयामि नमः । तत्रादौ सिद्धाश्रम पंचकं कुर्यात् ।**

## सिद्धाश्रम पंचक

हात जोडेर पूर्ण भक्तिभावले नतमस्तक हुँदै सिद्धाश्रम पंचकको पाठ गर्नुहोस् ।
**गुरुत्वं सदैवं पूर्णा तदैव, भाग्येन देवो भवदेव नित्यं ।**
**अहोभवां मम पूर्ण सिन्धुं, गुरुत्वं शरण्यं गुरुत्वं शरण्यं ॥**
**त्वमेव माता च पिता त्वमेव, त्वमेव बन्धुश्च सखा त्वमेव ।**
**त्वमेव विद्या द्रविणं त्वमेव, त्वमेव सर्व मम देव देव ॥**

**त्वं मातृ रूपं पितृ स्वरूपं, बन्धु स्वरूपं आत्म स्वरूपं ।**
**चैतन्य रूपं पूर्णत्व रूपं, गुरुत्वं शरण्यं गुरुत्वं शरण्यं ॥**
**त्वमेव माता.................**
**न तातो न माता न बन्धु र्न भ्राता,न पुत्रो न पुत्री न भृत्यो र्न भर्ता ।**
**न जाया न वित्तं न वृत्तिर्ममेवं, गतिस्त्वं मतिस्त्वं गुरुत्वं शरण्यं ॥**
**त्वमेव माता..................**
**अनाथो दरिद्रो जरा रोग युक्तो, महाक्षीण दीनः सदा जाड्य वक्त्रः ।**
**विपत्ति प्रविष्ट सदाहं भजामि, गुरुत्वं शरण्यं गुरुत्वं शरण्यं ॥**
**त्वमेव माता.................**
**त्वं मातृरूपं त्वं पितृ रूपं, सदैवं सदैवं कृपा सिन्धु रूपं ।**
**त्वमेव शरण्यं त्वमेव शरण्यं, गुरुत्वं सदैवं गुरुत्वं शरण्यं ॥**
**त्वमेव माता.................**
**न जानामि मन्त्रं न जानामि तन्त्रं, न योगं न पूजां न ध्यानं वदामि ।**
**न जानामि चैतन्य ज्ञानं स्वरूपं, एकोहि रूपं गुरुत्वं शरण्यं ॥**
**त्वमेव माता...................**
**एकोहि नामं एकोहि कार्य, एकोहि ध्यानं एकोहि ज्ञानं ।**
**आज्ञां सदैवं परिपालयन्ति, त्वमेवं शरण्यं त्वमेवं शरण्यं ॥**
**त्वमेव माता..................**
**त्वं ज्ञात रूपं त्वं अज्ञात रूपं, मम देह रूपं मम प्राण रूपं ।**
**पूर्णत्वं देह मम प्राणः सदेवं, त्वमेवं शरण्यं त्वमेवं शरण्यं ॥**
**त्वमेव माता..................**
**अनया पूजया सांगाय सपरिवाराय सिद्धिकार्य पूर्णत्वं पूर्ण समर्पण देहं समर्पयामि मम वचन कर्मणां पूर्ण आज्ञां परिपालयन्ति पात्र रूपेण त्वां चरणे समर्पयामि नमः ।**

**समर्पण प्रार्थना**

पुष्प लिएर हात जोड्नुहोस् ।

ॐ **पूर्णत्व प्राप्ताय पूर्णां हरिदारा इदं वचसा पुनराकृतो वस्त्रे सदैवंमा इदं (गुं) सदकृतो पूर्णत्व प्राप्ति रूपेण मन वचन कर्म अस्तित्व कार्य जीर्ण त्वं आज्ञां परिपालयन्ति सिद्धाश्रमं प्रापयन्ति पूर्ण भौतिक धन धान्य यश ऐश्वर्य प्रतिष्ठा सुख सौभाग्य प्राप्ताय निमित्तं त्वां चरणारविन्दे परिपूजयन्ति मम समस्त शरीरे मन प्राण त्वां समर्पयामि मम समस्त विकार काम क्रोध लोभ मोह अहंकारं पूर्ण सिद्ध चैतन्य रूपेण त्वां चरणे समर्पयामि नमः ।** (पुष्प चढाइदिनुहोस् ।)

**(श्री गुरु पादुका पूजनं सम्पूर्णम् ।)**

यसप्रकार गुरु पादुका पूजन सम्पन्न गरिसकेपछि गुरु आरती पुस्तकमा उल्लेख भएअनुसार स्तुति, वन्दना, निखिलेश्वर आरती, गुरु आरती, गोरक्ष आरती, जगदीश्वर आरती र गुरु समर्पण स्तुति सबै मिलेर गाउनुहोस् ।



## आश्रममा उपलब्ध सेवाहरू

- योग, ध्यान, हिप्नोटिज्म, आदि बारे अध्ययन, अनुसन्धान एवं परामर्श सेवा ।
- मन्त्र शक्तिद्वारा हाम्रो दैनिक जीवनमा आइपर्ने विविध समस्याहरूको समाधान ।
- फोटो थेरापीको माध्यमबाट असाध्य रोगहरूको उपचार ।
- मन्त्र तन्त्रको माध्यमबाट साधनामा अघि बढ्न चाहने साधक साधिकाहरूलाई विशेष मार्गनिर्देशन ।
- पूर्ण प्रामाणिकरूपमा विशेष प्रक्रियाद्वारा प्राण-प्रतिष्ठित यन्त्र, माला, आसनलगायत साधनाका लागि आवश्यक सम्पूर्ण सामग्रीहरूको व्यवस्था ।
- परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको बारेमा अध्ययन अनुसन्धान एवं जानकारी चाहनेहरूका लागि गोरक्ष निखिल पुस्तकालयको व्यवस्था ।
- विभिन्न किसिमका रोगहरूको उपचारका लागि विशेष तान्त्रिक हिलिङ्को व्यवस्था ।

# वैशाख महिनाको सूक्ष्म काल विवरण

**आदरणीय पाठकवृन्द, विभिन्न महिनाका विभिन्न बारहरुमा पर्ने कालहरुको जानकारी तथा सूक्ष्म काल निर्णयका सम्बन्धमा विगतका अङ्कहरूमा प्रकाशित गरिएको थियो । यस अंकमा वैशाख महिनामा पर्ने विभिन्न चारवटा कालहरुको पनि ५-५ मिनेटको अन्तरालको फलहरुलाई प्रस्तुत गरिएको छ जसलाई हेर्न सँगै दिइएको तालिकालाई आधार बनाउनु होला ।**

## वैशाख महिनाको महेन्द्र काल

१ देखि ५ मिनेटसम्म : व्यापार, सफलता, शिक्षा, खेल, प्रणय प्रसङ्ग, विवाह तथा यात्रा आदिका लागि यस समयलाई छनौट गर्नुपर्दछ । यस समयका देवता 'चन्द्र' हुन्, पान चपाएर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

६ देखि १० मिनेटसम्म : कुनै पनि व्यापारको उन्नति, जागिर, यात्रा आदिका लागि यस समयलाई छनौट गर्नु शुभ मानिएको छ । यस समयकी अधिष्ठात्री 'गौरी' हुन्, हरिद्रा खानु शुभ मानिएको छ ।

११ देखि १५ मिनेटसम्म : यात्रा, शुभ कार्य, कुरा छिन्ने, विवाह, माङ्गलिक कार्य, व्यापारिक कार्य, जुवा आदिका लागि यो समय अनुकूल र शुभ छ । यस समयका देवता 'चन्द्र' हुन्, दही खानु शुभ मानिएको छ ।

१६ देखि २० मिनेटसम्म : कुनै पनि प्रकारको यात्रा एवं सफलताका लागि यो समय विशेष शुभ एवं अनुकूल छ । यस समयका देवता 'सूर्य' हुन्, सख्खर खाएर यात्रा अथवा कार्य प्रारम्भ गर्नुपर्दछ ।

२१ देखि २५ मिनेटसम्म : यात्रा, विवाह, व्यापार कार्य, मित्रता, उन्नति कार्य आदिका लागि यस समयको छनौट गर्नुपर्दछ । यस समयका अधिष्ठात्रा 'मरुत' हुन्, तिल खानु शुभ मानिएको छ ।

२६ देखि ३० मिनेटसम्म : उन्नति कार्य, विवाह, प्रणय, प्रेम प्रदर्शन, लाभ कार्य, खेल, यात्रा आदिका लागि यो समय शुभ छ । यस समयको अधिष्ठाता 'कामदेव' हुन्, मह खाएर कार्य प्रारम्भ गरियो भने विशेष शुभ रहन्छ ।

३१ देखि ३५ मिनेटसम्म : यात्रा, जुवा, हानि-लाभ, सट्टा, भाग्य परीक्षा, मित्रता, लाभदायक कार्य आदिका लागि यो समय उचित छ । यस समयका स्वामी 'कार्तवीर्यार्जुन' हुन्, दही खानु शुभ मानिएको छ ।

३६ देखि ४० मिनेटसम्म : भाग्योदय, चुनाव, परीक्षा दिने, सफलतासम्बन्धी कार्य, स्थिर कार्य, भाग्योदयका लागि यस समयको छनौट गर्नुपर्दछ । यस समयका स्वामी विष्णु हुन्, चामल खाएर कार्य प्रारम्भ गर्नु विशेष शुभ मानिएको छ ।

४१ देखि ४५ मिनेटसम्म : यात्रा, विजय कार्य, धन संग्रह, किनमेल र शुभ कार्यका लागि यो समय अनुकूल छ । यस समयका अधिष्ठाता 'ब्रह्मा' हुन्, पान खाएर कार्य प्रारम्भ गर्नु शुभ रहन्छ ।

४६ देखि ५० मिनेटसम्म : व्यापार कार्यका लागि यो समयको छनौट विशेष शुभ रहन्छ, यस समयकी अधिष्ठात्री 'लक्ष्मी' हुन्, दूध प्रसाद खाएर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

५१ देखि ५५ मिनेटसम्म : यात्राको दृष्टिबाट यस समयको विशेष महत्त्व छ, यस समयका अधिष्ठाता 'गणेश' हुन् । अत: गणेशको स्मरण गरेर यात्रा प्रारम्भ गर्नुपर्दछ । दूबो चपाउनु शुभ मानिएको छ ।

५६ देखि ६० मिनेटसम्म : शुभ कार्य एवं व्यापारका लागि सर्वथा अनुकूल छ । यस कालका स्वामी 'शिव' हुन्, कार्य प्रारम्भ गर्नुपूर्व धनियाँ खानु अनुकूल रहन्छ ।

## वैशाख महिनाको अमृत काल

१ देखि ५ मिनेटसम्म : यात्रा, व्यापार, उन्नति कार्य एवं समस्त शुभ कार्यका लागि यो समय उपयुक्त छ । यसका प्रधान देव 'विष्णु' हुन्, पकवान खानु शुभ मानिएको छ ।

६ देखि १० मिनेटसम्म : स्थायी कार्य एवं व्यापार उन्नति तथा यात्रादिका लागि शुभ समय छ । यस समयकी अधिष्ठात्री 'गौरी' हुन्, दूबो चपाउनु शुभ रहन्छ ।

११ देखि १५ मिनेटसम्म : विवाह, कुरा छिन्ने आदिका लागि प्रस्थान, अन्तर्वार्ता, मुद्दा मामिला आदिका लागि यो समय शुभ छ । यस समयका अधिष्ठाता 'हनुमान्' हुन्, सख्खर भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

१६ देखि २० मिनेटसम्म : कुनै पनि कार्यका लागि यो समय शुभ छ । यसका देवता 'नृसिंह' हुन्, लड्डुको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

२१ देखि २५ मिनेटसम्म : यात्रादिका लागि सर्वाधिक

# चैत्र, वैशाख, श्रावण, भाद्र, माघ र फाल्गुण महिनामा पर्ने विभिन्न कालहरू

| आइतबार | | सोमबार | | मंगलबार | | बुधबार | | बिहीबार | | शुक्रबार | | शनिबार | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* |
| ६:००-६:४८दिन | महेन्द्र | ६:००-७:३६दिन<br>*७:३०-९:००* | अमृत<br>*राहु* | ६:००-८:२४दिन | अमृत | ६:००-७:३६दिन | वक्र | ६:००-८:२४दिन | अमृत | ६:००-६:४८दिन | शून्य | ६:००-७:३६दिन | शून्य |
| ६:४८-१०:०० | अमृत | ७:३६-१०:४८<br>*७:३०-९:००* | वक्र<br>*राहु* | ८:२४-९:१२ | शून्य | ७:३६-९:१२ | अमृत | ८:२४-९:१२ | शून्य | ६:४८-१:१२<br>*१०:३०-१२:००* | अमृत<br>*राहु* | ७:३६-८:२४ | वक्र |
| १०:००-२:०० | वक्र | १०:४८-१:१२ | अमृत | ९:१२-१०:०० | वक्र | ९:१२-११:३६ | वक्र | ९:१२-१०:४८ | शून्य | १:१२-४:२४ | वक्र | ८:२४-९:१२<br>*९:००-१०:३०* | शुन्य<br>*राहु* |
| २:००-५:१२<br>*४:३०-६:००* | शून्य<br>*राहु* | १:१२-३:३६ | वक्र | १०:००-१२:२४ | अमृत | ११:३६-१:१२<br>*१२:००-१:३०* | अमृत<br>*राहु* | १०:४८-१:१२ | अमृत | ४:२४-५:१२ | अमृत | ९:१२-१२:२४<br>*९:००-१०:३०* | अमृत<br>*राहु* |
| ५:१२-६:००<br>*४:३०-६:००* | अमृत<br>*राहु* | ३:३६-५:१२ | अमृत | १२:२४-३:३६<br>*३:००-४:३०* | शून्य<br>*राहु* | १:१२-२:००<br>*१२:००-१:३०* | शून्य<br>*राहु* | १:१२-४:२४<br>*१:३०-३:००* | वक्र<br>*राहु* | ५:१२-६:०० | शून्य | १२:२४-१:१२ | शुन्य |
| ६:००-६:४८रात्रि | शून्य | ५:१२-६:०० | शून्य | ३:३६-५:१२<br>*३:००-४:३०* | अमृत<br>*राहु* | २:००-३:३६ | वक्र | ४:२४-६:०० | अमृत | ६:००-७:३६रात्रि | वक्र | १:१२-२:०० | वक्र |
| ६:४८-७:३६ | महेन्द्र | ६:००-७:३६रात्रि | वक्र | ५:१२-६:०० | शून्य | ३:३६-४:२४ | महेन्द्र | ६:००-७:३६रात्रि | वक्र | ७:३६-८:२४ | शून्य | २:००-३:३६ | शून्य |
| ७:३६-८:२४ | शून्य | ७:३६-९:१२ | महेन्द्र | ६:००-७:३६रात्रि | वक्र | ४:२४-६:०० | अमृत | ७:३६-९:१२ | महेन्द्र | ८:२४-१०:४८ | अमृत | ३:३६-५:१२ | अमृत |
| ८:२४-१०:०० | अमृत | ९:१२-१०:०० | अमृत | ७:३६-९:१२ | महेन्द्र | ६:००-६:४८रात्रि | शून्य | ९:१२-१०:०० | अमृत | १०:४८-१:१२ | वक्र | ५:१२-६:०० | शून्य |
| १०:००-१०:४८ | शून्य | १०:००-१:१२ | वक्र | ९:१२-१०:०० | अमृत | ६:४८-९:१२ | अमृत | १०:००-१:१२ | वक्र | १:१२-३:३६ | महेन्द्र | ६:००-८:२४रात्रि | वक्र |
| १०:४८-१:१२ | वक्र | १:१२-२:४८ | अमृत | १०:००-१२:२४ | वक्र | ९:१२-१०:४८ | महेन्द्र | १:१२-२:४८ | अमृत | ३:३६-४:२४ | शून्य | ८:२४-१०:४८ | अमृत |
| १:१२-३:३६ | शून्य | २:४८-४:२४ | शून्य | १२:२४-२:०० | अमृत | १०:४८-१२:२४ | वक्र | २:४८-४:२४ | शून्य | ४:२४-६:०० | अमृत | १०:४८-१२:२४ | वक्र |
| ३:३६-४:२४ | महेन्द्र | ४:२४-५:१२ | वक्र | २:००-२:४८ | शून्य | १२:२४-२:०० | शून्य | ४:२४-६:०० | अमृत | | | १२:२४-२:०० | शून्य |
| ४:२४-६:०० | अमृत | ५:१२-६:०० | शून्य | २:४८-३:३६ | वक्र | २:००-६:०० | अमृत | | | | | २:००-३:३६ | अमृत |
| | | | | ३:३६-४:२४ | महेन्द्र | | | | | | | ३:३६-४:२४ | शून्य |
| | | | | ४:२४-६:०० | अमृत | | | | | | | ४:२४-६:०० | अमृत |

परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमाली (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) द्वारा रचित ***'ज्योतिष और काल निर्णय'*** पुस्तकमा आधारित ।

**महेन्द्रकाल- सर्वश्रेष्ठ, अमृतकाल- श्रेष्ठ, वक्रकाल- सामान्य, शून्यकाल- निकृष्ट । शुभकालमा राहुकाल पनि मिसिएको छ भने त्यो समय पनि आफैं अशुभ हुन्छ ।**

सूक्ष्म काल विवेचना गर्नुपर्दा– सर्वप्रथम कुन बार हो र कति बजेको विवेचना गर्नु छ, त्यसअनुसार कुन काल परेको छ (महेन्द्रकाल, अमृतकाल, वक्रकाल वा शून्यकाल) त्यो तालिका हेरेर पत्ता लगाउनु पर्दछ । उदाहरणका लागि २०६५ चैत्र १६ गते आइतबार बिहान ७:५५ बजेको सूक्ष्म विवेचना गरौं । आइतबार प्रातः ६:४८ देखि १० :०० बजेसम्म अमृतकालको समय छ । हाम्रो समय अमृतकालमा परेको छ । अब हाम्रो समय ७:५५ बाट हाम्रो काल शुरु भएको समय ६:४८ घटाऔं । बाँकी रह्यो १:०७ अर्थात् १ घण्टा ७ मिनेट । अब घण्टा जति भए पनि त्यसलाई छोडिदिएर मिनेटमा मात्र विचार गर्नुहोस्- ७ मिनेट । त्यसपछि चैत्र महिनाको अमृतकालमा ७ मिनेट कहाँ पर्दछ हेर्नुहोस् । त्यहाँ लेखिएको छ– **६ देखि १० मिनेटसम्म : परीक्षा, चुनाव, अन्तरवार्ता, नयाँ जागिर तथा यात्रा आदिको लागि समय शुभ छ । यस समयका अधिष्ठात्रा 'चन्द्र' हुनुहुन्छ, दही खानु शुभ रहन्छ ।** अब यहाँ लेखिएअनुसार गर्न सक्नुहुनेछ ।

उपयुक्त समय छ । यस समयकी अधिष्ठात्री देवी 'सरस्वती' हुन्, मुगीको दाना चबाएर यात्रा प्रारम्भ गर्नु शुभ रहन्छ ।

२६ देखि ३० मिनेटसम्म : जुवा, व्यापार, व्यवसायका लागि, यात्रा, यज्ञ, पूजन, अनुष्ठान आदिका लागि यो समय शुभ छ । यस समयका देवता 'शिव' हुन्, चामलको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

३१ देखि ३५ मिनेटसम्म : जुवा, व्यापार प्रारम्भ गर्न, कुनै पनि घर वा पसलको मुहूर्त आदिका लागि यो शुभ समय हो । यसका देवता 'विष्णु' हुन्, चिनी खानु शुभ हुन्छ ।

३६ देखि ४० मिनेटसम्म : यात्राका लागि यो समय शुभ छ । यसका देवता 'गणपति' हुन्, सख्खरको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

४१ देखि ४५ मिनेटसम्म : यात्रा, स्थायित्वसम्बन्धी कार्य, व्यापार प्रारम्भ, मुहूर्त आदिका लागि यस समयको छनौट शुभ छ । यस समयकी देवी 'लक्ष्मी' हुन्, दूध प्रसाद खाएर गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

४६ देखि ५० मिनेटसम्म : जुवा, व्यापार, यात्रा आदिका लागि समय उपयुक्त छ । यस समयका देव 'शनि' हुन्, तिल खाएर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

५१ देखि ५५ मिनेटसम्म : परीक्षा, चुनाव, अन्तर्वार्ता तथा यात्रा आदिका लागि समय शुभ छ । यस समयका अधिष्ठाता 'चन्द्र' हुन्, दही खाँदा शुभ हुन्छ ।

५६ देखि ६० मिनेटसम्म : यात्रा, महत्त्वपूर्ण र उन्नति कार्यहरूका लागि यस समयको छनौट राम्रो हुन्छ । यस समयका देवता 'रुद्र' हुन्, कार्य प्रारम्भ गर्नु अगाडि सख्खरको प्रयोग शुभ मानिएको छ ।

वैशाख महिनाको वक्र काल

१ देखि ५ मिनेटसम्म : यात्राका लागि केही बाधकारक तर अन्त्यमा ठीक । यसका प्रधान देव 'अग्नि' हुन्, तोरी चपाएर कार्य गर्दा उत्तम रहन्छ ।

६ देखि १० मिनेटसम्म : व्यापार आदिका लागि अपेक्षाकृत ठीक, प्रारम्भमा विलम्ब र पछि सिद्धि । यसका प्रधान देव 'गरुड' हुन्, हरिद्रा खाएर कार्य प्रारम्भ गरियो भने शुभ रहन्छ ।

११ देखि १५ मिनेटसम्म : प्रेम प्रदर्शन, प्रणय आदिका लागि यस समयको छनौट ठीक रहन्छ । यस समयका प्रधान देव 'कामदेव' हुन्, मह खाएर जानुहोस् ।

१६ देखि २० मिनेटसम्म : जुवा खेल्नको लागि उपयुक्त समय । यसका प्रधान देव 'वरुण' हुन्, दही खाएर यात्रा गर्नुहोस् ।

२१ देखि २५ मिनेटसम्म : मित्रता बढाउन, अधिकार प्राप्त गर्न, स्थानान्तरण आदिका लागि यो समय उपयुक्त छ । यसका प्रधान देव 'सूर्य' हुन्, जीराको प्रयोग गरियो भने विशेष अनुकूल रहन्छ ।

२६ देखि ३० मिनेटसम्म : जासूसी, भेद ज्ञात गर्ने, सामुन्ने भएको व्यक्तिलाई प्रभावित गर्ने आदिका लागि यो समय ठीक छ । यसका प्रधान देव 'वात' हुन्, चामल खाएर जानुहोस् ।

३१ देखि ३५ मिनेटसम्म : यात्रादिका लागि यो समय अनुकूल छ । 'मरुत' यसका देव हुन् । सख्खर खाएर जाँदा राम्रो हुन्छ ।

३६ देखि ४० मिनेटसम्म : व्यापार, व्यवसायका लागि सामान्य अनुकूल । यसका प्रधान देव 'चन्द्रमा' हुन्, दही खानु शुभ मानिएको छ ।

४१ देखि ४५ मिनेटसम्म : व्यापारादि कार्यहरूका लागि यो शुभ समय छ । यसका प्रधान देव 'गुरु' हुन्, बेसनको प्रयोग शुभ मानिएको छ ।

४६ देखि ५० मिनेटसम्म : जुवा, दौड, सिनेमा, व्यापार आदिका लागि यो उपयुक्त समय हो । यसका प्रधान देव 'शुक्राचार्य' हुन् । मीठो पकवान खाएर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

५१ देखि ५५ मिनेटसम्म : प्रेम, वाद्य, जुवा आदिको लागि शुभ समय छ । यसका प्रधान देव 'पुष्पधन्वा' हुन्, मह खाँदा शुभ हुन्छ ।

५६ देखि ६० मिनेटसम्म : यात्रा आदिका लागि विशेष अनुकूल छ । यसका प्रधान देव 'गणपति' हुन्, सख्खरको प्रयोग शुभ मानिएको छ ।

## वैशाख महिनाको शून्य काल

१ देखि ५ मिनेटसम्म : अनुकूल, शुभ, यात्रादिका लागि अनुकूल, प्रधान देवता 'ब्रह्मा' हुन्, दही भक्षण गर्नुहोस् ।

६ देखि १० मिनेटसम्म : प्रत्येक कार्यका लागि अशुभ एवं बाधाकारक । प्रधान देवी 'हिडिम्बा' हुन्, घिउको भक्षण शुभ ।

११ देखि १५ मिनेटसम्म : प्रत्येक कार्यका लागि सामान्य अनुकूल । प्रधान देवता 'मकरध्वज' हुन् । तोरी खानु शुभ ।

१६ देखि २० मिनेटसम्म : प्रत्येक कार्य अथवा यात्रादिका लागि प्रारम्भमा बाधाकारक तर पछि शुभ । प्रधान देवता 'लक्ष्मी'लाई स्मरण गरेर चामल खाएर कार्य गर्नुहोस् ।

२१ देखि २५ मिनेटसम्म : जुवा, मद्य, घोडा दौड, सौन्दर्य प्रसाधन सामग्री बिक्री, व्यापार आदिको लागि अनुकूल । प्रधान देवता 'विश्वकर्मा'लाई स्मरण गरेर सख्खर, घिउ खानु शुभ ।

२६ देखि ३० मिनेटसम्मः यात्रादिका लागि विपरीत समय, शुभ कार्यहरूमा वर्जित, प्रधान देवता 'चित्रगुप्त'लाई स्मरण गरेर फूल चपाएर कार्य प्रारम्भ गरियो भने केही अनुकूलता ।

३१ देखि ३५ मिनेटसम्म : प्रणय प्रसङ्ग, मद्यपान, जुवा, घोडादौड आदिका लागि अनुकूल । यसका प्रधान देवता 'शुक्राचार्य' हुन्, फल खाएर जानुहोस् ।

३६ देखि ४० मिनेटसम्म : बाधाकारक समय, तर मुद्दामामिला आदिका लागि शुभ । 'हनुमान्'लाई स्मरण गरेर, सख्खर, घिउ खाएर गइयो भने अनुकूल ।

४१ देखि ४५ मिनेटसम्म : जुवा खेल्नका लागि शुभ, यस समयका देवता 'काल' हुन्, मह खाएर गइयो भने अनुकूल ।

४६ देखि ५० मिनेटसम्म : कार्यको प्रारम्भमा तनावहरू, तर पछिको स्थितिमा सुधार, प्रधान देव 'अग्नि'को स्मरण र तिल खानु शुभ ।

५१ देखि ५५ मिनेटसम्म : प्रत्येक कार्यका लागि व्यवधानपूर्ण, तर 'गौरी'लाई स्मरण गरेर र दही खाएर कार्य प्रारम्भ गर्दा केही अनुकूलता ।

५६ देखि ६० मिनेटसम्म : प्रत्येक कार्यका लागि अशुभ एवं तनावपूर्ण, तर पनि 'गणपति'लाई स्मरण गरेर र सख्खर खाएर कार्य प्रारम्भ गरिन्छ भने शुभ ।

जय गुरुदेव !

# २०६५ सालला‍ई

नववर्ष २०६६को शुभारम्भ सँगसँगै हामी सबैले २०६५ लाई सदाका लागि बिदा गरिसकेका छौं । परमपूज्य सद्‌गुरुदेवहरूको असीम निगाहस्वरूप स्थापना भएको सिद्धाश्रम शक्ति केन्द्रले पनि आफ्नो एक दशकको जीवन यात्रालाई पार गर्दै एघारौँ वर्षमा पाइला टेकेको छ । बाल्यावस्थादेखि नै संघर्ष र चुनौतिसँग सामना गर्दै आइरहेको यस केन्द्रले सफलताको शिखर चुम्दै २०६५ लाई पनि आफ्नो इतिहासमा सुनौलो अक्षरले लेख्न सफल भएको छ । गत वर्ष यस संस्थाले सम्पन्न गरेका कार्यक्रमहरू र हासिल गरेका उपलब्धिहरूलाई यहाँ चर्चा गरिएको छ ।

## १. नियमित कार्यक्रमहरू

परमपूज्य सद्‌गुरुदेवहरूको असीम अनुकम्पा कृपा आशीर्वादस्वरूप यस केन्द्रले नियमित कार्यक्रमको रूपमा सञ्चालन गर्न पाएका निम्न कार्यक्रमलाई पनि गत वर्ष पूर्णरूपले नै सम्पन गर्न सफल भयो । समय समयमा हुने विभिन्न बन्द, हड्‌तालजस्ता बाधा व्यवधानका बाबजुद पनि गत वर्ष यस संस्थाले परम पूज्य सद्‌गुरुदेवहरूको आदेशलाई अक्षरशः पालना गर्न सफल भएको छ ।

**१.१ दैनिक कार्यक्रम**

दैनिक कार्यक्रमको रूपमा यस केन्द्रमा प्रत्येक दिन आश्रम खुल्ने समयमा कुनै फेरबदल भएन । साथै संस्थाको दिव्य कार्यक्रम बेलुका ५ बजेको नित्य आरती पनि निर्धारित समयमा नै प्रत्येक दिन सम्पन्न भयो । प्रत्येक दिन हुने दिव्य आरतीमा साधक साधिकाहरूको उल्लेदखनीय उपस्थिति रहेको थियो ।

**१.२ साप्ताहिक कार्यक्रम**

साप्ताहिक कार्यक्रमको रूपमा गत वर्ष सम्पन्न भएका कार्यक्रमहरू

क) प्रत्येक बृहस्पतिबारको गुरूपादुका पूजन कार्यक्रम पनि प्रत्येक हप्ता नै सफलतापूर्वक सम्पन्न भयो । यस कार्यक्रममा साधक साधिकाहरूको उल्लेखनीय सभागिता दिन प्रतिदिन बढ्‌दो छ ।

ख) प्रत्येक शुक्रबार बेलुका ४:०० बजे कार्यकर्ताहरूका लागि सञ्चालन हुँदै आइरहेको स्टाफ मिटिङ कार्यक्रम पनि निर्धारित समयमा हरेक शुक्रबार नै सम्पन्न भयो ।

ग) प्रत्येक सोमबार कार्यकर्ताहरूका लागि सञ्चालित स्पेशल ब्लेसिङ्ग मेडिटेशन कार्यक्रम गत वर्ष विशेष अवस्थामा

बाहेक प्राय: नियमितरूपमा नै सम्पन्न भयो ।

घ) प्रत्येक हप्ता सञ्चालित गोरक्ष निखिल सन्देश रेडियो कार्यक्रम गत वर्ष पनि विभिन्न जिल्लाहरूमा विभिन्न रेडियो स्टेशनहरू मार्फत नियमितरूपमा नै सम्पन्न भयो । गत वर्ष थप ९वटा स्टेशनमार्फत पनि प्रसारण आरम्भ भयो । काठमाडौँको रेडियो सिटी एफ.एम.बाट भएको प्रसारण भने विशेष कारणवश हाललाई स्थगित गरिएको छ । हाल देशभर जम्मा १७ वटा रेडियो स्टेशनमार्फत प्रसारण भइरहेको छ ।

**१.३ मासिक कार्यक्रम**

सिद्धाश्रम शक्ति केन्द्रले गत वर्षको मासिक कार्यक्रमहरूलाई पनि सफलतापूर्वक सम्पन्न गर्न सफल भयो । गत वर्ष सम्पन्न गरेका मासिक कार्यक्रमहरू यस प्रकार छन् ।

क) दिव्य गुरु महोत्सव कार्यक्रमलाई यस केन्द्रले गत वर्ष पनि भव्यताका साथ सम्पन्न गर्न सफल भयो । गत वर्षको सम्पूर्ण कार्यक्रमहरू गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको प्राङ्गणमा नै सम्पन्न भएको थियो । साधक साधिकाहरूको व्यापक चापले गर्दा विद्याश्रमको प्राङ्गण पनि सानो भइरहेको अनुभव हुन्थ्यो ।

ख) मासिक हवन कार्यक्रमको रूपमा सि.श.के.ले गत वर्ष पनि श्री शिव गोरक्ष हवन कार्यक्रम, तान्त्रोक्त वटुक भैरव हवन कार्यक्रम, तान्त्रोक्त महालक्ष्मी हवन कार्यक्रम, तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम क्रमश: प्रत्येक महिनाको पहिलो सोमबार, मंगलबार, बुधबार र बिहीबार विभिन्न अप्ठ्यारा परिस्थितिहरूका बाबजुद पनि सम्पन गर्न सफल भयो । साधक साधिकाहरूको बढ्दो सहभागिताले कार्यक्रमका लागि स्थानाभाव भइरहेका महसुस हुन्थ्यो । साथै यस वर्षदेखि सि.श.के. सम्पर्क कार्यालय रामघाट, कास्कीले माता विन्ध्यवासिनीको दिव्यतम हवन कार्यक्रम विन्ध्यवासिनी माताको मन्दिर प्राङ्गणमा प्रत्येक महिनाको पहिलो बुधबार सञ्चालन गर्ने सौभाग्य प्राप्त गरेको छ । साथै नियमितरूपमा सफलता पूर्वक सम्पन्न पनि गर्दै आइरहेको छ । त्यसैगरी सम्पर्क कार्यालय दमौली, तनहुँले पनि वेदका रचयिता महर्षि वेदव्यासको दिव्यतम हवन कार्यक्रम व्यासगुफा परिसरमा गत वर्षदेखि नै सञ्चालन गर्दै सफलतापूर्वक सम्पन्न गरेको छ ।

ग) परमपूज्य सद्‌गुरुदेवहरूको महान् योजनालाई साकार पार्न दक्ष जनशक्ति निर्माण गर्ने उद्धेश्यले प्रत्येक महिनाको २० र २१ गते सञ्चालन हुँदै आइरहेको कार्यकर्ता तालिम तथा प्रशिक्षण कार्यक्रम गत वर्ष पनि सफलतापूर्वक सम्पन्न भयो । गत वर्ष हजारौँ कार्यकर्ताहरूलाई तालिम प्रदान गरिएको थियो । कार्यकर्ताको संख्यात्मक वृद्धिलाई भन्दा गुणात्मक वृद्धिलाई जोड दिँदै आधारभूत तालिम कार्यक्रम भने स्थगित गरिएको थियो ।

**१.४ वार्षिक कार्यक्रम**

**क) सद्‌गुरुदेव अवतरण दिवस:**

परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको ७५औं अवतरण दिवस कार्यक्रमलाई यस केन्द्रले गत वर्ष एक दिवसीय कार्यक्रमको रूपमा भव्यताका साथ गतवर्ष वैशाख ९ गते सम्पन्न गर्‍यो । केन्द्रको आयोजनामा गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको प्राङ्गणमा साधक साधिका तथा भक्तजनहरूको विशाल सहभागितामा सम्पन्न भएको कार्यक्रम परमपूज्य सद्‌गुरुदेवहरूको विशेष पूजन स्तुति बन्दना, स्तवन पाठ, मन्त्र जप, विशेष ध्यान, हवन, आरती, भजन कीर्तन, नृत्य, आदि विविध कार्यक्रमका साथ सम्पन्न भएको थियो ।

**ख) रोट महोत्सव:**

गत वर्षको जेठ ७ गतेदेखि १७ गतेसम्मलाई यस केन्द्रले पाँचौं रोट महोत्सव कार्यक्रमको रूपमा सम्पन्न गर्न सफल भयो । गोरखाको गोरख गुफा जहाँ पुग्न मात्रै पनि कठीन, पानीको अभाव लगायत विभिन्न भौतिक व्यवधानका बाबजुद पनि रोट महोत्सव कार्यक्रम सफलतापूर्वक सम्पन्न गर्न यो केन्द्र सफल भयो । सवा लाख रोट विशेष विधिविधानका साथ अर्पण, प्रत्येक दिन सवालाख बत्ती प्रज्ज्वलनलगायत भजन कीर्तन पूजन हवन आदि विविध कार्यक्रमहरूका साथ पाँचौं रोट महोत्सव भव्यताका साथ यस केन्द्रले सम्पन्न गर्न सफल भयो ।

**ग) महाप्रयाण दिवस:**

परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजले महाप्रयाण लिनुभएको पावनतम दिन (जुलाई ३ अर्थात् गत वर्षको असार १९ गते) लाई यस केन्द्रले दशौँ महाप्रयाण दिवसको रूपमा विशेष कार्यक्रमको रूपमा सम्पन्न गर्न सफल भयो । यस दिन सि.श.के. केन्द्रीय कार्यालयलगायत सम्पूर्ण सम्पर्क कार्यालयहरूमा बिहान ९:०० बजेदेखि ४:००

बजेसम्म अनवरत रूपमा परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको दिव्य मन्त्रजप गरेर बेलुका प्रसाद वितरण पनि गरिएको थियो ।

**घ) गुरु पूर्णिमा महोत्सवः**

शिष्यहरूका लागि सबैभन्दा महत्त्वपूर्ण चाडको रूपमा रहेको गुरु पूर्णिमा महोत्सवलाई गत वर्षको श्रावण ३ गते यस केन्द्रले केन्द्रलगायत सम्पूर्ण सम्पर्क कार्यालयहरूमा विशेष कार्यक्रमको आयोजना गरी भव्यताका साथ सम्पन्न गर्न सफल भएको छ। केन्द्रको आयोजनामा गो. नि. ज्योति दिव्य विद्याश्रममा बिहान १०:१५ बजेदेखि बेलुका ४:०० बजेसम्म सञ्चालित यस कार्यक्रममा निखिल स्तवन, गोरक्ष स्तवन पाठ, पूजन, मन्त्रजप, हवन, आरती, भजन कीर्तन प्रवचन, विशेष मुद्रा ध्यान कार्यक्रमका साथ सम्पन्न भएको थियो। साथै उक्त कार्यक्रममा ६ लाख बत्ती पनि प्रज्ज्वलित गरिएको थियो । साथै बेलुका आश्रममा भजन कीर्तन र दीपावली पनि गरिएको थियो ।

**ङ) श्री शिव गोरक्ष महोत्सव**

परमपूज्य सद्‌गुरुदेवहरूको परम कृपा आशीर्वादस्वरूप यस केन्द्रले श्रावण महिनालाई श्री शिव गोरक्ष महिनाको रूपमा मनाउँदै आउने क्रमलाई गत वर्ष पनि निरन्तरता दिने सौभाग्य प्राप्त गऱ्यो। केन्द्रीय कार्यालयलगायत सम्पूर्ण सम्पर्क कार्यालयहरूमा महिनाभर नै विविध कार्यक्रमहरूका साथमा परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथको मन्त्र लेखन तथा विशेष सुरक्षा मन्त्र जप कार्यक्रमका साथ सम्पन्न गरिएको थियो ।

**च) गुरुमाताको शुभ-जन्मदिवस**

प्रत्येक वर्षको अप्रिल ८ तारीखलाई यस केन्द्रले पूजनीय गुरुमाता भगवती श्रीमालीज्यूको जन्मदिवसको रूपमा मनाउँदै आउने क्रममा गत वर्षको चैत्र २६ गते विशेष कार्यक्रमका साथ केन्द्र लगायत विभिन्न सम्पर्क कार्यालयहरूमा अपराह्न ४:०० बजेदेखि भजन कीर्तन खीर प्रसाद वितरण र बेलुका दीपावलीका साथ हर्सोल्लासमय वातावरणमा सम्पन्न गर्न यो केन्द्र सफल भयो । भजन कीर्तन र नृत्यमा आनन्दित हुँदै सबैजनाले माताको भक्तिमा डुबेर यो कार्यक्रम सफल पारिएको थियो ।

## २ विशेष चाडपर्वमा सञ्चालित कार्यक्रम

परमपूज्य सद्‌गुरुदेवहरूको परम कृपा अनुकम्पास्वरूप यस केन्द्रले प्रत्येक वर्ष आउने विभिन्न चाड पर्वहरूमा विशेष पूजन तथा विविध कार्यक्रमका साथ सम्पन्न गर्ने सु अवसरलाई गत वर्ष पनि सफलतापूर्वक नै सम्पन्न गऱ्यो । गत वर्षमा नववर्ष कार्यक्रम, ऋषि तर्पणी, नाग पञ्चमी, श्री कृष्ण जन्माष्टमी, ऋषि पञ्चमी, हरितालिका तीज, नवरात्रि पर्व, द्यौसी भैलो, दीपावली, श्रीपञ्चमी, महाशिवरात्रि पर्व लगायत विभिन्न अवसरहरूमा पनि यस केन्द्रले विविध कार्यक्रमहरू सम्पन्न गर्न सफल भयो ।

## ३. संगठन विस्तार

क) परमपूज्य सद्‌गुरुदेवहरूको परम कृपा आशीर्वादस्वरूप यस केन्द्रले विभिन्न आरती सञ्चालन केन्द्र, प्रचारप्रसार कक्षहरू गत वर्ष पनि विभिन्न ठाउँहरूमा खोल्न सफल भयो । काठमाडौंको नयाँ बजार, तीनथाना नैकाप, विशालनगर र म्हैपीमा थप प्रचारप्रसार कक्षहरू खुल्न सफल भए। त्यसैगरी विभिन्न जिल्लाहरूमा पनि आरती सञ्चालन केन्द्र तथा प्रचारप्रसार कक्षहरू गत वर्ष पनि धेरै खुलेका छन् ।

ख) परमपूज्य सद्‌गुरुदेवहरूको परम कृपा, अनुकम्पा, आशीर्वादस्वरूप आध्यात्मिक गतिविधिअन्तर्गत संस्थाको प्रतिनिधिको रूपमा सावर पन्थी नं. १ र २ गत श्रावण १७ गते रसिया प्रस्थान गरी विभिन्न साधनात्मक कार्यक्रम सम्पन्न गरी भाद्र १५ नेपाल फिर्ता हुनुभएको थियो। उहाँहरूको यो भ्रमण उक्त देशको लागि तेश्रो भ्रमण हो ।

## ४ प्रकाशन

गोरक्ष निखिल वाणी मासिक पत्रिकाको गत वर्ष पनि यस केन्द्रले आकर्षक साज सज्जाका साथ प्रत्येक महिना नै प्रकाशन गर्न सफल भयो भने परमपूज्य सद्‌गुरुदेवहरूको दिव्य तस्वीर सहितको तिथिमितियुक्त आकर्षक क्यालेण्डर पनि गत वर्ष प्रकाशन गऱ्यो यस केन्द्रले। त्यसैगरी सावर संरचना शक्ति केन्द्रको प्रकाशन ध्यानामृत तथा अमृत पुष्प पनि प्राप्त गर्न सफल भयो ।

## ५ गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम

गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमका लागि पनि गत वर्ष सुनौलो वर्षको रूपमा स्थापित हुन सफल भयो। कक्षा नर्सरीदेखि सातसम्म पठनपाठन हुँदै आएको यस स्कुलले गत वर्ष कक्षा ८ सम्म पठनपाठन गराउन सफल भयो। साथै गत श्रावण २७ गते एक कार्यक्रमका बीच विभिन्न हाउस (वशिष्ठ, विश्वामित्र, वाल्मीकि र वेदव्यासनामक विद्यार्थी समूह) गठन गराई विभिन्न अतिरिक्त क्रियाकलाप सम्बन्धी कार्यक्रमहरू पनि गत वर्ष गर्न सफल भयो । विद्यार्थीको संख्यामा पनि वृद्धि गरी थप नयाँ भवनमा फैलिन सफल भयो, विद्याश्रम। जेहेन्दार तथा गरीब विद्यार्थीका लागि गत वर्ष अक्षय कोषमा रूपैयाँ थप गर्न पनि यो विद्याश्रम सफल भयो। साथै विद्यार्थीहरूको पठनपाठनमा पनि गुणस्तर वृद्धि

गर्न सफल भयो । पहिलोपटक यस विद्याश्रमले महाभारत विषयमा उपत्यकाव्यापी अन्तर-विद्यालय हाजिरीजवाफ प्रतियोगिता कार्यक्रम गर्न पनि सफल भयो ।

## ६ भजन संग्रहको गुरू चरणार्पण

परमपूज्य सद्गुरुदेवहरूको अभ्यर्थनामा गाइएका भजनहरूको संग्रहको यस केन्द्रले गत वर्ष अडियो क्यासेट तथा सिडी दुईवटा छुट्टाछुट्टै संग्रहको रूपमा निकाल्न सफल भयो । प्रेमले भन्नोस् जय गुरुदेव र समर्पण नामक यी भजन संग्रहहरूलाई परम पूज्य सद्गुरुदेवहरूको चरणकमलमा अर्पण गरी सा. प. १ र २ का सदस्यज्यूहरूले छुट्टाछुट्टै कार्यक्रममा सबैका लागि सार्वजनिक गराउनु भएको थियो ।

## ७ अनापको ढोका खोल्न सफल

विगतमा सावर पन्थी तहसम्म मात्रै ढोका खोल्न सफल यस केन्द्रले परमपूज्य सद्गुरुदेवहरूको परम कृपा अनुकम्पा आशीर्वादस्वरूप महत्वपूर्ण उपलब्धिको रूपमा पृथ्वीतटकै लागि अति दुर्लभ र विरलै मात्र प्राप्त हुने अज्ञात नाथपन्थीको ढोका खोल्न सफल भयो ।

## ८ ध्यान कार्यक्रम

परमपूज्य सद्गुरुदेवहरूको परम कृपा अनुकम्पा आशीर्वादस्वरूप यस केन्द्रले गत वर्ष अन्तर्राष्ट्रिय स्तरको ध्यान कार्यक्रम लागू गराउन सफल भयो । विभिन्न चरणका ध्यान कक्षा एवं तान्त्रिक दीक्षा कार्यक्रमअन्तर्गत गत वर्ष केन्द्रलगायत विभिन्न सम्पर्क कार्यालयहरूमा यस्ता ध्यानका कक्षा सम्पन्न भइसकेका छन् । गत वर्ष पहिलो र दोश्रो चरणसम्मका ध्यान कक्षाहरू सम्पन्न भए ।

## ९ जिल्ला,सम्पर्क कार्यालयहरूका गतिविधिहरू

क) विभिन्न जिल्लास्थित सम्पर्क कार्यालयहरूमा पनि केन्द्रका नियमित कार्यक्रमहरूलाई सफलतापूर्वक सम्पन्न गरी अन्य थुप्रै कार्यक्रमहरू गर्न सफल भयो । प्रचारात्मक कार्यक्रम, भजन कीर्तन कार्यक्रम, वक्तृत्वकला कार्यक्रमजस्ता कार्यक्रमहरू धेरै सम्पर्क कार्यालयहरूले सम्पन्न गरे ।

ख) गोरखा सौरपानीस्थित सम्पर्क कार्यालयले आश्रम भवन निर्माण गरी गत वर्षको कार्तिक २५ गतेदेखि आफ्नै आश्रममा परमपूज्य सद्गुरुदेवहरूको दिव्य आरती गर्ने सौभाग्य प्राप्त गऱ्यो ।

ग) पाल्पा जिल्लाको तल्लो मलेङ्ग (ताहूँ)मा परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथको मूर्ति एक समारोहका बीच स्थापना गर्न गर्न सफल भयो ।

घ) काभ्रेको बनेपा सम्पर्क कार्यालयका लागि साँगा ८ मा रहेको ४ आना जग्गा साधक पूर्ण वनमाली र साधिका कृष्णदेवी वनमालीबाट प्राप्त भयो । साथै यसै अन्तर्गत रहेको दाप्चा आरती सञ्चालन केन्द्रले जग्गा प्राप्त गर्न सफल भयो र गत माघ २७ गते आश्रम भवन शिलान्यास पनि गर्न सफल भएको छ । उक्त आश्रमका लागि साधक जीतलाल श्रेष्ठज्यूले उक्त जग्गा प्रदान गर्नु भएको हो ।

ङ) काठमाडौँको सिमलटारस्थित आरती सञ्चालन केन्द्रले आफ्नै जग्गा प्राप्त गरी गत मंसिर २३ गते भवन शिलान्यास गर्न सफल भएको छ ।

च) कास्की जिल्लाको लेखनाथ सम्पर्क कार्यालयले भव्य भवन निर्माण गरी गत वैशाख २६ गतेदेखि आफ्नै भवनमा सरेको छ ।

छ) कास्की जिल्लाको माझठाना-२ मा नेपालको इतिहासमै पहिलोपटक गोरक्ष निखिल मन्दिरको निर्माण कार्य थालनी गरिएको छ ।

ज) प्रस्तावित सम्पर्क कार्यालय सुर्खेतले आफ्नै भवन निर्माण गरी गत फाल्गुण १० गतेदेखि आफ्नै आश्रम भवनबाट कार्यक्रमहरू सञ्चालन गरिएका छन् ।

झ) सम्पर्क कार्यालय गोरखा बसपार्कअन्तर्गत रहेको गोरखा दरवार आरती सञ्चालन केन्द्रले आफ्नै जग्गा प्राप्त गरी रोट महोत्सवको अवसर पारी भवन शिलान्यास पनि गरिसकेको छ । हाल उक्त भवन निर्माणाधीन रहेको छ । उक्त आश्रमको लागि साधक भाइचन्द्र श्रेष्ठ र साधिका बनु श्रेष्ठले जग्गा प्रदान गर्नुभएको थियो ।

अन्त्यमा, यस केन्द्रले २०६५ साललाई पनि विभिन्न गतिविधिहरू सफलता पूर्वक सम्पन्न गर्न सफल भयो । विभिन्न अप्ठ्यारा, विघ्न बाधाहरू जस्तै नेपाल बन्द, चक्काजाम, हड्ताल आदि जस्ता देशमा भएका अस्थिरताका बीच यस केन्द्रका हरेक कार्यक्रमहरू निर्धारित मिति र समयमा नै सम्पन्न भयो । विभिन्न ठाउँमा जग्गा प्राप्त गरी परमपूज्य सद्गुदेवहरूको दिव्य आश्रम भवनहरू निर्माण भई आश्रमका गतिविधि सञ्चालन भइसकेका छन् भने कति आश्रमहरू निर्माणाधीन छन् । यसरी आश्रमले विभिन्न कार्यक्रमहरू सफल गरेको छ । गत वर्ष पनि नयाँनयाँ हाँगाहरूका साथमा विशाल वृक्षको रूपमा स्थापित हुन सफल भएको छ । परमपूज्य सद्गुरुदेवहरूको महान् योजनाका लागि गतिशील यस केन्द्रले गुरु आदेशलाई पालना गर्दै आफ्नो इतिहासमा २०६५ लाई गरिमामय वर्षको रूपमा स्थापित गराउन सफल भयो । जय गुरुदेव !

# हार्दिक आमन्त्रण

## सद्गुरुदेव अवतरण दिवस

**मितिः २०६६ वैशाख ८ गते, (अप्रिल २१ २००९)**
**स्थानः गो. नि. ज्योति दिव्य विद्याश्रम, बसुन्धरा, काठमाडौं**

दादा गुरुदेव स्वामी सच्चिदानन्द महाराजको आज्ञालाई शिरोधार्य गर्दै परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज भारतको राजस्थान प्रान्तमा २१ अप्रिल सन् १९३३ मा डा. नारायण दत्त श्रीमालीको रूपमा जन्म लिई विश्वमा सुविख्यात् हुनुभएको हो ।

आफ्नो अवतरणकालको प्रत्येक पल सद्गुरुदेवले त्यस ताका लुप्तप्राय बनिसकेका मंत्र, तंत्र, ध्यान, योग, ज्योतिष, आयुर्वेद आदिजस्ता आध्यात्मिक विधाहरूको पुनर्स्थापना गर्न र विश्वभरि छरिएर रहेका आफ्ना जन्मौंजन्मदेखिका शिष्यहरूलाई पुनः आफूसँग जोड्दै शिष्य निर्माणमा बिताउनुभयो ।

गुरु जन्मोत्सव, गुरु अवतरण दिवसलाई 'पूर्णमदः पूर्णमिदं' को द्योतक मानिएको छ र सर्वश्रेष्ठ पर्वको रूपमा मानिएको छ। शिष्यको लागि गुरु अवतरण दिवसजस्तो अरू कुनै पर्व हुन सक्दैन । यो शास्त्रीय मान्यता मात्रै नभएर वास्तविकता पनि हो । गुरु जन्मोत्सव शिष्योत्सव हो । यस दिन शिवत्व शक्ति, ब्रह्मत्व शक्ति एवं गुरुत्व शक्ति विचरण भइरहेको हुन्छ । यस दिनमा सद्गुरुदेवप्रति थोरै मात्रै पनि श्रद्धा, भक्ति, समर्पण प्रकट गर्न सक्यौं भने सहजै गुरुत्व शक्तिको कृपा, अनुकम्पा एवं आशीर्वाद प्राप्त गर्न सक्छौं ।

## सवालाख रोट अर्पण कार्यक्रम

**मितिः २०६६ वैशाख २६ गते देखि ज्येष्ठ ५ गते सम्म**
**स्थानः गोरख गुफा, गोरखा दरबार क्षेत्र, गोरखा**

हाम्रो धार्मिक मान्यताअनुसार विभिन्न देवदेवीहरूलाई मनपर्ने फल, फूल, परिकार आदिका बारेमा हामीले सुन्दै आएका छौं। भगवान् गणेशको मन्दिरमा जाँदा लड्डु लिएर जान्छौं भने हनुमान्जीलाई चढाउन पेडा लैजाने गर्छौं, त्यस्तै भगवान् शिवजीलाई बेलपत्र, विष्णुलाई तुलसीपत्र, सरस्वतीलाई सेतो पुष्प, भगवतीलाई रातो पुष्प आदि चढाउने गर्दछौं । यसैप्रकार हाम्रा परम आराध्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथलाई खुशी तुल्याउने एउटा सहज माध्यम हो 'रोट' । रोट एक प्रकारको रोटी हो जसमा विभिन्न मरमसलाहरूको मिश्रण हुन्छ जसलाई विशिष्ट तरिकाले बनाइन्छ ।

सिद्धाश्रम शक्ति केन्द्रले २०६१ सालदेखि हरेक वर्ष वैशाखी पूर्णिमाको शुभ अवसर पारेर श्री श्री महायोगी गुरु गोरखनाथलाई सवालाख रोट अर्पण गर्ने कार्यक्रम गर्दै आइरहेको छ। यस्ता महोत्सवलाई जोसुकै जहाँसुकै भए रहे पनि सहयोग गर्नु आत्मोन्नतितिर बढ्नु हो । यसरी हामीले आफ्नो आत्माको उद्धार गर्दै सबैको कल्याण गर्नु छ । यस शुभ अवसरलाई रोट महोत्सवले पूर्ण गर्ने कुरामा ढुक्क हुन सकिन्छ । जय गुरुदेव !

# सद्गुरुदेवको नारायण अवतार
## धन्य छ अप्रिल २१ तारीख

परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज यस विश्व ब्रह्माण्डका अधिपति, सम्पूर्ण सिद्धि र शक्तिका स्वामी हुनुहुन्छ र उहाँ नै लौकिकरूपमा डा. नारायण दत्त श्रीमालीज्यूको रूपमा परिचित र प्रतिष्ठित हुनुहुन्छ। यस रूपमा भारतको राजस्थान प्रान्तको जोधपुर जिल्लाको खरंटिया भन्ने गाउँमा सन् १९३३ अप्रिल २१ तारीखका दिन अवतरित भई उहाँले लुप्तप्रायः स्थितिमा पुगेका हाम्रा सम्पूर्ण विद्याहरू मंत्र, तंत्र, ज्योतिष, सम्मोहन, हस्तरेखा, आयुर्वेद आदिको बारेमा खोज, अनुसन्धान गरी लाखौँ मानिसहरूमा व्यावहारिकरूपमा प्रयोग गर्दै तिनलाई समाजमा पुनर्स्थापित गर्नुभएको छ। देहगतरूपमा गर्नुपर्ने सम्पूर्ण कार्यहरू सम्पन्न गरेर बाँकी कार्य आफ्ना शिष्यहरूलाई जिम्मा लगाई ३ जुलाई, १९९८ का दिन उहाँले महाप्रयाण लिनुभएको थियो।

कुनै पनि तिथि, मिति, बार वा नक्षत्रको महत्त्वको रहस्यपूर्ण पक्ष यो छ कि तिनमा केही न केही महत्त्वपूर्ण घटना घटेका छन्। कोही न कोही विशेष व्यक्तित्त्वको जन्मले नै यी दिनहरूलाई पावन एवं दिव्य बनाएका छन्, सुशोभित गराएका छन्। दिव्यतम व्यक्तित्व, चैतन्य पुरुष, युगद्रष्टा, जसको कर्मले यस संसारलाई आप्लावित गरायो, त्यस्ता व्यक्तित्त्वले जुन तिथि, मिति वा नक्षत्रलाई माध्यम बनाए अर्थात् जुन तिथि वा मितिमा त्यस्ता व्यक्तित्त्वहरूले अवतरण लिए, त्यो तिथि वा मिति स्वतः नै इतिहासमा स्वर्णिम बन्न पुगे।

परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजले सन् १९३३ अप्रिल २१ तारीखमा अवतरण लिनुभएर यस दिनलाई गुरु शिष्यको मिलनको दिन बनाइदिनुभयो जुन दिनसँग असंख्य साधक साधिकाहरू एवं शिष्य शिष्याहरूको हृदयको धड्कन जोडिन पुगेको छ।

अप्रिल २१ एउटा दिव्य उत्सव हो जुन होलीको रंगसमान उमङ्गमय र त्यति नै उल्लासमय छ, तिहारको झिलिमिली र दशैंको आनन्दसमान छ, महाशिवरात्रिसमान अमृत तत्त्वले पूर्ण छ र श्रीकृष्ण जन्माष्टमीसमान प्रेम र माधुर्यले आप्लावित छ। त्यसैले यस्तो पावन दिनलाई महोत्सवको संज्ञाले विभूषित गरिएको छ।

जुन दिनमा गुरु यस धर्तीमा आफ्ना शिष्यहरू एवं भक्तहरूको उद्धार एवं कल्याणका लागि अवतरित हनुहुन्छ, त्यस दिनलाई गुरु जन्मोत्सवको रूपमा अत्यन्त हर्षोल्लासका साथ मनाउनु शिष्य, साधक एवं भक्तहरूको परम कर्तव्य हो। जुन दिनले तपाईं हाम्रो जीवनलाई नयाँ मोड दिएको छ, नयाँ गति दिएको छ र चौरासी लाख जीवनको खेललाई छोट्याइदिएको छ, त्यस दिनप्रति हामी जति नै कृतज्ञ भए पनि कमै हुन्छ।

यस वर्ष पनि अप्रिल २१ तारीख (वि.सं. २०६६ साल वैशाख ८ गते मंगलबार) को दिनलाई सिद्धाश्रम शक्ति केन्द्रले सद्गुरुदेव अवतरण दिवसको रुपमा भव्य एवं दिव्यरुपमा मनाउनेछ। उक्त दिनको शुभकामना!

# गोरक्ष प्रकट दिवस र सवालाख रोट अर्पण महोत्सव

सम्पूर्ण योगीहरूमा महायोगी, नाथहरूमा आदिनाथ, अनादिनाथ मात्र नभई महानाथको रूपमा परिचित, सावर साधनाका प्रणेता, नाथ सम्प्रदायका प्रवर्तक, भगवान् शिवका सर्वाधिक महत्त्वपूर्ण अवतारका रूपमा प्रतिष्ठित श्री शिव गोरक्ष अजर, अमरकायायुक्त अनादि व्यक्तित्व हुनुहुन्छ। प्रत्येक युगमा विभिन्न स्वरूपबाट सत्यताको रक्षा गर्दै सम्पूर्ण सृष्टिलाई सदा सन्तुलनमा राख्नुहुने महायोगी श्री श्री गुरु गोरखनाथ हाम्रो चर्चा, कल्पनाभन्दा धेरै परको व्यक्तित्व हुनुहुन्छ। सिद्धहरुमा महासिद्ध योगीराज श्री शिव गोरक्षको उच्चता, महानता र व्यापकता आफैमा स्वयंसिद्ध छ, प्रत्येक युग यसको साक्षी छ। सत्य, त्रेता, द्वापर र कलि चारै युगहरूमा उहाँको महिमा गाइएको छ, चारै युगहरु उहाँप्रति नतमस्तक छन्। काल, राष्ट्र, धर्म, सम्प्रदायभन्दा धेरै माथि हुनुहुन्छ श्री श्री महायोगी गुरु गोरखनाथ।

गुरु गोरखनाथ यस धर्तीमा पहिलोपटक गोरक्ष भूमि नेपालको गोरख गुफामा प्रकट हुनुभएको थियो। उक्त समयमा वैशाख पूर्णिमा तिथि परेकाले नै यस दिनलाई गोरक्ष प्रकट दिवस भनिन्छ। उहाँजस्तो अन्यतम विभूति यस धरामा पहिलोपटक प्रकट हुनुभएको दिवस स्वयंमा कति दिव्य र चैतन्य हुन्छ, यस कुराको वर्णन असम्भव छ।

नेपाल भूमि गोरक्ष भूमि हो जुन परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथको आशीर्वादबाट सिर्जिएको छ। तसर्थ, उहाँप्रति कृतज्ञ हुनु, उहाँको उच्च सम्मान गर्नु प्रत्येक नेपालीको प्रथम कर्तव्य हो। नेपालीहरू आफ्नो यस कर्तव्यबाट विमुख हुनाले नै आज संकटको भुमरीमा रुमल्लिरहेका छन्।

सिद्धाश्रम शक्ति केन्द्र, नेपाल यसै दिनको अवसर पारेर वैशाखी पूर्णिमालाई सवालाख रोट अर्पण महोत्सवको रुपमा २०६१ सालबाट मनाउँदै आइरहेको छ। श्री श्री महायोगी गुरु गोरखनाथलाई खुशी तुल्याउने एउटा सहज माध्यम हो 'रोट'। रोट एक किसिमको रोटी हो। यस प्रकारको रोटी श्री श्री महायोगी गुरु गोरखनाथलाई चढाउन पकाउने गरिन्छ। रोट 'महाप्रसाद' हो। सद्‌गुरुदेवको चरणकमलमा अर्पित रोट खान पाउनु मानव जीवनको उच्च सौभाग्य हो। जसले रोट प्रसाद ग्रहण गर्दछ त्यो आत्मा नै धन्य हुन्छ। त्यो आत्माका युग-युगान्तरका पाप कर्महरू, दोषहरू नाश हुन्छन् र एउटा जीवले मुक्ति प्राप्त गर्नका लागि सहज मार्ग निर्माण हुन्छ।

रोट महोत्सवको कार्यक्रमले छैटौं वर्षमा पदार्पण गर्न पाउनु सबैका लागि अत्यन्तै हर्षको विषय भएको छ। यस वर्ष पनि वैशाख २६ देखि ज्येष्ठ ५ गतेसम्म ११ दिन गोरखास्थित गोरख गुफामा सिद्धाश्रम शक्ति केन्द्रले सवालाख रोट अर्पण गर्न लागिरहेको छ। सबैलाई आमन्त्रण छ।

*परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथका लीलाहरूको वर्णन गरी तयार पारिएको श्री गोरख महापुराणलाई शृङ्खलाबद्धरूपमा प्रकाशित गर्दै लगिएको छ । यसबाट परमपूज्य सद्गुरुदेवको बारेमा जान्न, बुझ्न खोज्ने सम्पूर्ण पाठकहरू लाभान्वित हुनुहुनेछ भन्नेमा हामी विश्वस्त छौँ । यस महापुराणलाई संकलन एवं अनुवाद गरी प्रस्तुत गरिएको हो । यससम्बन्धी सम्पूर्ण कुराहरूको जिम्मेवारी संकलक एवं अनुवादक (विष्णु खनाल,गोर्खा) स्वयंको नै हुनेछ ।*

# श्री गोरख महापुराण

## सदगुरु तत्त्व र गुरु रहस्य

अब यहाँ सद्गुरु तत्त्वको रहस्यको चर्चा गर्न अनिवार्य छ जसले अखण्ड चराचर विश्वमा परमपद पाउँछन् । तिनै गुरु हुन् जसले अज्ञानरूपी अन्धकारमा शिष्यको आँखामा गाजलको काँटीरूप ज्ञानको उज्यालो भरिदिन्छन् । माथि जुन चर्चा भएको छ त्यही अखण्ड चराचरमा व्यापक परमपदको दर्शनको एउटा उपाय हो । यो ज्ञान चक्षु र परमपद वास्तवमा उपाय र उपेयरूपमा ज्ञानरूपमा गणना गरिएपछि पनि स्वरूप दृष्टिबाट एकै वस्तु हो । कुनै मनुष्य यो पनि सोध्न सक्छन्– यो ज्ञान चक्षु कस्तो छ ? यसको निमिलिन र उन्मिलनको के रहस्य हो ? यसको उत्तरमा केवल यत्ति नै भन्न सकिन्छ कि जसरी अज्ञान चक्षु छ त्यसरी नै ज्ञान चक्षु पनि छ । अज्ञान चक्षुबाट जसरी जगत् र जगत्का पदार्थ भिन्न-भिन्नरूपमा साक्षात् देखिन्छ त्यस्तै नै ज्ञान चक्षुबाट जगत्का सबै वस्तुलाई अभिन्नरूपमा साक्षात् भावबाट देख्न सकिन्छ । हरेक मानिसको ज्ञान चक्षु र अज्ञान चक्षु दुवै नै विश्व प्रकृतिको देन हो । जसबाट हामी परिचित छौँ त्यसको नाम अज्ञान चक्षु हो । अज्ञान अवस्थामा अज्ञान चक्षुले काम गर्दछ र ज्ञान चक्षु बन्द हुन्छ । साधारण अवस्थामा अज्ञान चक्षुको क्रियाशीलताबाट मनुष्य द्विनेत्र हुन्छ । प्राचीनकालमा प्रज्ञा चक्षु शब्दबाट अन्धा मानिसलाई बुझिन्थ्यो । अवस्थाको पूर्णता सिद्ध भएबाट ज्ञान शक्ति र अज्ञान शक्ति दुवै नै आफ्नो अधिकारमा रहन्छ । त्यस समय मनुष्य इच्छाअनुसार दुवै नै शक्तिहरूमा समुचित भावबाट व्यवहार गर्न सक्छ । महाजन समाजले यस ज्ञान चक्षुलाई तेस्रो नेत्र भनेका छन् । यसलाई ज्ञानदानद्वारा खोलिदिनु सद्गुरुको परम कर्तव्य हो । साधारण अवस्थामा पनि जुन उपायबाट हुन्छ सद्गुरुको खोजी गर्नुपर्दछ । तर प्रश्न यो छ कि– सद्गुरुका अतिरिक्त अरू कोही यस आत्म चैतन्य जीवलाई अखण्ड प्रश्नको स्थितिमा पुर्‍याउन सक्दछ ? यसको एउटै उत्तर यो हो कि ज्ञानशक्ति र क्रियाशक्ति नै पूर्णरूपबाट आफ्नो अधिकारमा छैन । पहिले नै बताइसकिएको छ कि सद्गुरुले अनन्त करुणाद्वारा पूर्ण ज्ञान शक्ति र पूर्ण क्रियाशक्तिद्वारा

अनादिकालबाट बाँधिएको जीवलाई जगाइदिन्छन् र उसको आँखाको पर्दा हटाएर उसलाई शिव पदमा स्थापित गरिदिन्छन् । यसको लागि शिष्यको कर्तव्य हो कि ऊ गुरुको महिमामय रूपको चिन्तन गरेर झुकेर चरणमा प्रणाम गरोस् किनकि गुरुले आफ्नो गुण र शक्तिबाट संसार चक्रबाट उसलाई निकालेर चिदालोकबाट उद्भासित मुक्ति पदमा प्रतिष्ठित गरेका छन्। जुन गुरु शिष्यलाई अखण्ड पदमा प्रतिष्ठित गर्न सक्दैनन् ती गुरु भएर पनि सद्गुरु होइनन् । जो शिष्यलाई मुक्ति दिन सक्दैनन् ती गुरु भए पनि वास्तविक गुरु होइनन् किनकि अवशिष्ट बन्धनको कारण गुरुको आवश्यकता फेरि पनि रहन जान्छ । जसले आफ्नो अपार महिमाबाट मुक्तिको द्वार खोलेका छन् तिनै सद्गुरु हुन् । तिनै नमस्कार गर्न योग्य छन् किनकि

स्वयं भगवान् नै मानवरूपमा आएर कृपापूर्वक गुरुरूपमा मग्न जीवको उद्धार गर्छन् । अहिलेसम्म हामीले मनुष्य गुरुको चर्चा गर्‍यौं तर सिद्ध गुरु र दिव्य गुरु पनि छन् जसमा ईश्वर नै एक मात्र अनुग्राहक छन् । ब्रह्मानन्दं परम सुखदम् भनेर नै सद्गुरुलाई नमस्कार गरिन्छ किनकि ज्ञान अंजन-शलाकाबाट अज्ञान तिमिरान्धको ज्ञान आँखा खोल्नेवाला भनिएको छ । यस चर्चाको विषयबाट यो बुझ्न सकिन्छ कि मनुष्य योनिमा आचार्य पद प्राप्त गर्न कति कठिन छ । पुत्र दीक्षामा वागीश्वरीको गर्भबाट जुन देह मिल्दछ त्यही आचार्य देह हो । अधिकारादि सम्पत्तिका साथसाथै वैन्दव देहको पनि निवृत्ति हुन्छ । त्यस समय विन्दु क्षोभ रहँदैन शिवतत्त्व लाभ हुन्छ ।

हरि ॐ तत्सत् ।

# गुरु तिम्रै आवाहनमा

अप्रिल २१ यो शुभ दिनमा
ब्रह्माण्ड सारा उल्लसित लाग्छ ।
हर आत्मा यहाँ उत्थानको आशमा
गुरुसँग भेट्ने बहाना खोज्छ ।।
थोपा मिलेझैं समुद्रभित्र
आत्मा मिलेझैं परमात्माभित्र ।
आवाहन शायद गुरुवर हजूरको
यो दिन गुरु र शिष्य मिलनको ।।
ब्रम्हाण्डभरिका हे स्वामी गुरुदेव
कसरी तिमीलाई शब्दमा बाँधुँ ?
चाह छ मनमा म 'शिष्य' बन्छु
कसरी चुपचाप यो मनलाई बाँधुँ ।।
शब्दको सीमा नाघेर गुरुवर
आँसुले तिम्रो आवाहन गर्छु ।
आउनेछौ पक्कै यो मनमा तिमी
नछुट्ने वाचा कसम म माग्छु ।।
कण-कणमा व्याप्त गुरुदेव मेरा
जाँदिन खोज्न म अन्त कतै ।
तिमीले थालेका ती दिव्य कार्य
पूरा गरेर छोड्नु छ अझै ।।
तिमी छौ कर्ता हे मेरा गुरुवर
निमित्त मलाई बनाउ बिन्ती ।
अघिल्ला जन्ममा भूल भयो गुरुवर
यो जन्म साँच्चै अपनाऊ बिन्ती ।।
रागद्वेषले भरिएको हाम्रो
भावना शुद्ध पार्नलाई प्रभुवर ।
पीडा दिए'नि शिष्यले आखिर
प्रेमको वर्षा छर्नलाई गुरुवर ।।
अनेक युगमा अनेक भेषमा
धरतीमा तिम्रो पाइला परेथ्यो ।
यो कालखण्ड गर्वित छ यसै
स्पर्श पाइ गोरख-निखिलको ।।
यो युग यसै चम्कने छैन
आध्यात्मिक क्रान्तिको ज्वाला नपाई ।
जाग्दैन धरती बदलिन्न यसै
गोरक्ष-निखिल सन्देश नपाई ।।
भक्ति भाव र साहस धैर्यले
सिँचित गराऊ हर शिष्य मन यो ।
रच्ने रचाउने तिमी नै हौ सारा
विचलित कहिल्यै नहोस् मन यो ।।
अप्रिल २१ यो शुभ दिनमा
ब्रह्माण्ड सारा उल्लसित लाग्छ ।
हर आत्मा यहाँ उत्थानको आशमा
गुरुसँग भेट्ने बहाना खोज्छ ।।
जय गुरुदेव !

–सुमित्रा सिलवाल
गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम

*यस स्तम्भअन्तर्गत परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूले आफ्नो अवतरणकालमा विभिन्न समयमा विभिन्न विषयमा दिनुभएको प्रवचनलाई धारावाहिकरूपमा प्रस्तुत गर्ने क्रममा 'अकथ कहानी प्रित की' विषयको प्रवचनलाई अनुवाद गरी प्रकाशन गरिएको छ ।*

# विरहभित्रको प्रेम

आज फेरि हामी प्रेमको बारेमा केही चर्चा गरौँ । आज फेरि एकपटक हामी प्रेमको मानसरोवरमा प्रवेश गरौँ । आज फेरि त्यस आनन्दमय जलमा अवगाहन गरौँ, स्नान गरौँ । तर प्रेमको मानसरोवरमा पौडिनका लागि हाँसको जस्तो उज्ज्वलता र पवित्रता आवश्यक छ किनकि जो पवित्र हुन सक्दछ, ऊ दिव्य हुन सक्दछ । जो पवित्र हुन सक्छ उसले विरहलाई झेल्न सक्छ र जसले विरहलाई झेल्न सक्छ उसैले प्रेम गर्न सक्छ । प्रेममा मिलन त छँदै छैन । मिलन त प्रेमको अन्तिम विन्दु हो । जहाँ मिलन छ त्यहाँ जीवनको आनन्द छँदै छैन । जति पनि आनन्द छ, मस्ती छ, छलछलाहट छ त्यो त विरहमा छ र यस विरहलाई पाउनका लागि मानसरोवरमा डुब्नुपर्दछ । यसको लागि हृदयलाई जाग्रत गर्नुपर्दछ जुन बुद्धिद्वारा सम्भव नै छैन किनकि प्रेममा कुनै पनि प्रकारको तर्क हुँदैन । प्रेममा कुनै पनि प्रकारको जिज्ञासा हुँदैन । यो त एउटा लप्का हो... भन्यो अनि गऱ्यो । मानसरोवरमा हाम फाल्नका लागि भनियो तुरुन्तै पालना पनि भयो- यस्तो हुन्छ प्रेम । प्रेममा मानसरोवर कति गहिरो छ भन्ने कुराको चिन्ता हुँदैन, यो पनि ख्याल रहँदैन कि कतै डुबिने त हैन... ? जो डुबेको छैन उसले प्रेमको आनन्द लिनै सक्दैन ।

यस्तो प्रेम पाउनका लागि भक्तले आफैलाई विरहिणीको रूपमा नियालिरहेको छ... । विरहिणी ! –खुलेको केश... बोझिल र उदास आँखा, थाके-थाकेजस्तो अनुहार... आँखामा छचल्किएको आँसु... र गलामा उच्छ्वास... यस्तो लाग्छ संसारमा प्रियतमका अतिरिक्त कोही छँदै छैन । जीवन भार बनेको छ । अब यस जीवनमा कुनै आनन्द छैन, रस छैन ।

–तर यस रसको आनन्द त उसले नै प्राप्त गर्न सक्दछ जो प्रेममा डुबेको छ । यस रसको मजा त उसले लिन सक्दछ जो विरहमा रूझेको छ, जसले विरहलाई देखेको छ र विरहको अनुभव गरेको छ । यसबाट त कलेजोमा छिद्र बन्दछ, कलेजो छियाछिया हुन जान्छ... र यही नै जीवनको सौभाग्य हो । यस सौभाग्यलाई राधाले प्राप्त गरिन्– मस्तीका साथ । जब कृष्ण हिँडे तब राधाले आफैलाई समेटिदिइन्, कृष्णका अतिरिक्त उनले केही हेर्ने इच्छा नै गरिनन् । जीवनभरि राधाले आँखा नै खोलिनन्, उनले आँखा बन्द गरिरहिन् । सखीहरू आए र सबैले सम्झाउँदै भने– राधा, आँखा खोल ।

उनले भनिन्– मैले कसका लागि आँखा खोलूँ ? म के हेरुँ ? जे देख्नु पर्ने थियो त्यो त मैले देखिसकेकी छु र जे देख्नु छैन त्यसलाई त देख्न पनि चाहन्न । अब त यी आँखामा केवल कृष्ण बसेका छन् ...बाँकी चितवन... मधुर मुस्कान... बाँसुरी बजाउँदै कृष्ण बसेका छन्... उनको मुस्कान मेरो जीवनको पूँजी हो... म त्यसलाई अमूल्य पूँजीजस्तै गरी आफ्नो आँखामा सम्हालिरहेकी छु । यदि मैले आँखा खोलेँ र त्यो पूँजी गायब भयो भने मैले के गर्ने ?

प्रेमको कहानी त भन्ने कुरै होइन, यो त अकथ हुन्छ । भनिदियो भने त फेरि प्रेम कहाँ हुन्छ र ? शब्दमा हामीले प्रेमलाई कति नै व्यक्त गर्न सक्दछौँ र ? किनकि त्यो अनन्त सरोवर हो जसमा हामी जति पौडिन्छौँ त्यति नै डुब्दै जानेछौँ । प्रेममा डुब्ने आनन्द त राधाले प्राप्त गरिन्, मीराले पनि यस आनन्दलाई लिइन् । पाइला पाइलामा बन्धन, पाइला पाइलामा अड्चन भएको वातावरणमा मीराले प्रेममा फाल हालिन् । अरूले के भन्लान् भनेर उनले कहिल्यै चिन्ता गरिनन् । उनलाई त केवल एउटै कुराको सम्झना थियो– म प्रेम गरिरहेकी छु । उनले भनिन्–

मेरे तो गिरधर गोपाल दूसरो न कोई,<br>
जाके सिर पर मोर मुकुट मेरो पति सोई ।

अरू कोही छैन मेरो जीवनमा । जोसँग मैले जीवनलाई एकरस गरेँ, उनका अतिरिक्त जीवनमा मेरो न कोही छ, न त कोही राख्न नै चाहन्छु । म त जीवनको आनन्द लिन चाहन्छु । मैले जीवनको मस्तीलाई देखेकी छु, त्यसैले म पाउजु बाँधेर नाच्न लागेकी छु । आफ्नो जीवनलाई मैले दाउमा लगाएकी छु... । जब मैले जीवनलाई दाउमा लगाई नै सकेँ, जब पाउजु बाँधी नै सकेकी छु भने अनि पाउजुको छनछनाहट कृष्णसम्म पुगी नै सकेको छ भने यस पाउजुलाई मैले कसरी खोलूँ ? –

पग घुंघुरु बाँध मीरा नाची रे<br>
मैं तो मेरे नारायण की हो गई आप ही दासी रे<br>
पग घुंघुरु...<br>
लोग कहे मीरा हुई बावरी सास कहे कुल नासी रे<br>
विष का प्याला राणाजी भेज्या पीवत मीरा हांसी रे<br>
मीरा के प्रभु गिरधर नागर सहज मिल्या अविनासी रे ।

त्यो त मलाई सजिलै प्राप्त भएको छ, यसका लागि मैले केही पनि प्रयत्न गर्नु परेन ।

जहाँ दुवैको आन्तरिक सम्बन्ध छ, त्यहाँ हृदय हृदयसँग आपसमा ठोक्किन जान्छ, हृदयसँग हृदय मिलिहाल्छ, एक आपसमा मिलन भई नै हाल्दछ । त्यहाँ यस कुराको चिन्ता हुन्न कि मेरो हृदयमा के छ, कति आगो छ ?

अब ममा कुनै प्रकारको ज्ञानश्चेतना छँदै छैन । मैले ज्ञान राख्नु पनि छैन किनकि जहाँ बुद्धि छ त्यहाँ प्रेम हुन सक्दैन, त्यहाँ त स्वार्थ हुन सक्दछ, त्यहाँ देहको लेनदेन हुन सक्दछ । पतिसँग देहको व्यापार नै त हुन्छ, उसले दाल, भात, कपडा ल्याइदिन्छ... र देह खरीद गर्दछ । यो खरीद गर्ने क्रिया त विवाहमा हुन्छ, प्रेममा हुँदैन । प्रेम त सहज अविनाशी हो– बिना कुनै स्वार्थ, बिना कुनै कपट हामी आफ्नो जिन्दगीलाई कसैको हातमा सुम्पिदिन्छौँ । यदि त्यो जीवनभरि प्राप्त हुँदैन भने पनि मनमा कुनै प्रकारको पछुतो हुँदैन । मात्र एउटै इच्छा रहन्छ कि उनलाई मेरो सम्झना रहोस् ।

मैं बिरहिन बौरी भई जानत ना कोउ भेद,<br>
अगिन बरे हियरा जरे भये कलेजे छेद ।

रातदिन यो शरीर त विरहको आगोमा जलिरहेको छ... केवल शरीर मात्र जलिरहेको छैन, हृदय पनि जलिरहेको छ तर यसको आनन्द, मस्ती त उसैले लिन सक्दछ जसले कुनै बेला यस आगोको अनुभव गरेको होस्, जसले कुनै बेला यस आगोलाई सहेको होस्, देखेको होस् । यो विरहको आगो त विरलै सौभाग्यवान्लाई प्राप्त हुन्छ । जसले जीवनमा प्रेम गरेको छैन उसले जीवनमा केही गर्न सक्दैन किनकि ‘जीवनको सुख त विरहभित्र हुन्छ ।’ क्रमशः

# अनुभव अनुभूति

परमपूज्य सद्‌गुरुदेवहरूको परम कृपा तथा अनुकम्पाले प्रारम्भिक चरणको ध्यानमा भाग लिने सौभाग्य पाएँ । त्यतिबेला म ज्यादै प्रफुल्लित र उत्साहित भएको थिएँ । मेरो ध्यान अवश्यै राम्रो हुनेछ भन्ने मलाई विश्वास थियो । ध्यानको पहिलो विधि राम्रोसँग सम्पन्न भयो, दोस्रो विधिमा ध्यानमा बस्दा केही छटपटी भइरह्यो, तेस्रो विधि राम्रोसँग सम्पन्न भयो । तर चौथो विधिमा आइपुग्दा ध्यान राम्रोसँग गर्न नसकेको हुनाले ज्यादै चिन्ता लाग्यो किनभने यस चरणमा ध्यानमा बस्दा रङ देख्नु पर्ने थियो । तर मैले रङ देख्न सकिरहेको थिइन । पाँचौं चरणको भस्त्रिका प्राणायाम राम्रोसँग गरेँ तर उक्त चरणमा पहेँलो रङ देख्नु पर्नेमा नदेखेको र बेलाबेलामा सेतो प्रकाश मात्र आँखामा आएको हुनाले पनि चिन्ता नै लाग्यो । छैटौं चरणमा मनमा ज्यादै छटपटी भयो । सबै अन्धकारमा डुबेजस्तो लाग्यो । ध्यानमा बस्दा कतिबेला एकघण्टा बित्छ होला भन्ने चिन्ताले सताइरह्यो । तर सातौं चरणमा भने अत्यन्तै आनन्दका साथ ध्यानलाई सम्पन्न गर्न सकेँ । यस चरणमा आँखामा उज्यालो प्रकाश परेको अनुभव अधिक मात्रामा हुन गयो । प्रत्येक ध्यानको अभ्यास गर्ने क्रममा एक न एक दिन जसरी भए पनि २० देखि ३० मिनेट ढिलो भएकै हुन्थ्यो । यस प्रकारले सातौं चरणसम्मको अभ्यास क्रममा अपेक्षित सफलता नपाएपछि उत्साह भने अलि सेलाएको थियो ।

ध्यान गर्ने अभ्यासको अवधि समाप्त भए पनि मैले भने भ्याएसम्म विभिन्न समयमा यसलाई पुनः अभ्यास गर्दै रहेँ । यसै क्रममा म आफूले आफ्नै समस्याहरूमाथि उपचार विधि प्रयोग गरेँ जसमा ९० प्रतिशत जति सफल पनि भएँ । त्यस्तै, फरक-फरक समस्या (रोग) भएका ५ जनालाई उपचार विधि प्रयोग गरेकोमा सबैलाई सफल उपचार दिन सफल भएँ । उपचार पाएर निको भएका सबैलाई गुरूप्रतिको विश्वास बढाउन र बाँड्न सफल भएँ । आफूमा पनि गुरूप्रतिको विश्वास र श्रद्धा पहिलेको भन्दा बढेर गयो । गुरूप्रतिको पहिलेको न्यून समर्पण ह्वात्तै बढेर गयो । अहिले जस्तोसुकै बाधा अवरोध र काम भए पनि संस्थाबाट आयोजित कार्यक्रमहरूमा नियमित भाग लिने अवसर प्राप्त हुन थालेको छ भने आश्रममा सम्भव भएसम्म नियमित आउने जाने जातावरण समेत बन्दै गइरहेको छ । कोठामा पनि पूजा, पाठ, ध्यान गर्ने वातावरण बन्दै गइरहेको छ ।

ध्यानबाट मेरो उच्च रक्तचापको समस्या समाधान भएर अहिले सामान्य अवस्थामा आएको छ । पहिले पहिले अनावश्यकरूपमा मानसिक तनाव बढी हुने गर्थ्यो भने अहिले ती समस्या समाधान भएका छन् । कहिलेकाहीं तनाव उत्पन्न भएमा तुरुन्तै समाधान पनि गर्न सक्छु । पहिलेभन्दा सोच्ने शक्तिमा उन्नति भएको छ । जस्तोसुकै आपत विपत आई परे पनि नडराई तथा नहडबडाई गर्न सक्ने मानसिक बल बढेको छ । भूत-प्रेत पिशाचहरूले पिर्छन् र तर्साउँछन् भन्ने मनमा गढेर रहेको दृढ विश्वास अहिले हटिसकेको छ ।

मेरो विचारमा ध्यानबाट आफूले अपेक्षा गरेको भएन भनेर दुःख मनाउ गर्नु पर्ने कुनै कारण छैन । आफूलाई प्राप्त निर्देशनअनुरूप हामीले ध्यान गर्दै जाने हो भने स्वतः नै ब्रह्माण्डीय ध्यानशक्ति, गुरु कृपा, अनुकम्पा, आशीर्वाद प्राप्त हुँदोरहेछ । यसका लागि धैर्यपूर्वक गुरूप्रतिको निरन्तर विश्वास, श्रद्धा, भक्ति एवं समर्पण चाहिँदो रहेछ ।

—कैलाश सुब्बा
लोकन्थली, काठमाडौं ।





साधना गरौँ साधक बनौँ ।
पढेर सुनेर होइन,
आफैँ अनुभव गरेर हेरौँ ।।

# स्वर्ण-जयन्तीको

# हार्दिक मंगलमय शुभ-कामना !

श्री मेघराज घिमिरे तथा श्रीमती कमला घिमिरे

हाम्रा पूजनीय बुबा श्री मेघराज घिमिरे तथा ममतामयी आमा कमला घिमिरे वैवाहिक जीवनमा प्रवेश गरी गौरवमय ५० वर्ष पूरा गर्नुभएको सुखद घडीमा उहाँहरूको दाम्पत्य जीवन सुदृढ भई अझ अटल रहोस् भनी परमपूज्य सद्गुरूदेव श्री श्री महायोगी गुरू गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको चरणकमलमा सभक्ति प्रार्थना गर्दछौं ।

**प्रार्थी:**

**श्रीमान/श्रीमती बद्रीराज घिमिरे**

**श्रीमान/श्रीमती विनोदराज घिमिरे**

**श्रीमान/श्रीमती शारदा पराजुली**

**श्रीमान/श्रीमती मीना पराजुली**

**श्रीमान/श्रीमती प्रभा आत्रेय**

# आफ्नो हात आफै हेरौँ

यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार मानिसको हातमा रहेका विभिन्न पर्वतहरूको बारेमा हामीले चर्चा गर्दै आइरहेका छौँ । प्रत्येक पर्वतको आफ्नै महत्त्व र स्वभाव रहेको हुन्छ जसअनुसार यस अंकमा चन्द्र पर्वतको बारेमा चर्चा गरिएको छ। यो लेख पढेर तपाईं पनि आफ्नो हातमा रहेको चन्द्र पर्वतको स्थितिबारे अध्ययन गरी आफ्नो स्वभावबारे जान्न सक्नुहुन्छ। यस स्तम्भको बारेमा कुनै प्रतिक्रिया भए हामीलाई पठाउन सक्नुहुनेछ ।

## चन्द्र पर्वत

चन्द्रमा मानिसको सबैभन्दा नजिकको ग्रह हो । त्यसैले यसको प्रभाव पनि मानिसमा सबैभन्दा बढी पर्दछ। वास्तवमा भन्ने हो भने यो ग्रह 'सुन्दरता र कल्पना'को ग्रह हो ।

हातमा आयु रेखादेखि बायाँतर्फ तथा मणिबन्धभन्दा माथि एवं नेपच्युन क्षेत्रभन्दा तल भाग्य रेखासँग मिलेको जुन क्षेत्र छ त्यो चन्द्र क्षेत्र अथवा चन्द्र पर्वत हो। जुन व्यक्तिको हातमा चन्द्र पर्वत विकसित भएको छ, त्यो व्यक्ति कोमल, रसिक एवं भावुक हुन्छ ।

जसको हातमा चन्द्र पर्वत पूर्णत: पुष्ट हुन्छ त्यस्तो मानिस प्रकृतिप्रिय एवं सौन्दर्यप्रिय हुन्छ । यस्तो मानिस वास्तविक जीवनबाट पर हटेर स्वप्नलोकमा नै विचरण गर्दछ। उसको जीवनमा कल्पनाको कुनै अभाव रहँदैन । एक प्रकारले यस्तो व्यक्ति स्वयंमा हराएको हुन्छ। उसले जीवनका कठोरता एवं अप्ठ्याराहरूलाई झेल्न सक्तैन र थोरै मात्र तनाव आए पनि विचलित हुन्छ ।

यस्तो व्यक्ति संसारको छलकपटबाट टाढै रहन्छ तथा शान्त र कल्पनामय जगत्मा विचरण गर्नेखालको हुन्छ । यस्तो व्यक्ति नै उच्चकोटिको कलाकार, संगीतज्ञ वा साहित्यकार हुन्छ । यस्तो व्यक्तिको विचारमा धार्मिकता विशेष रूपमा हुन्छ। कसैको दवाबमा यस्तो व्यक्तिले कार्य गर्न सक्दैन । यस्तो व्यक्तिको विचार स्वतन्त्र एवं स्पष्ट हुन्छ ।

जसको हातमा चन्द्र पर्वतको अभाव देखिन्छ, त्यस्तो व्यक्ति कठोर हृदयी एवं पूर्ण भौतिकवादी हुन्छ । जसको जीवन युद्धप्रधान हुन्छ, त्यस्तो व्यक्तिको हातमा चन्द्र पर्वतको अभाव स्पष्टरूपमा देख्न सकिन्छ ।

जसको हातमा चन्द्र पर्वत राम्रोसँग विकसित हुनछ त्यो भौतिकवादी नभएर कल्पनावादी हुन्छ । प्रेम तथा सौन्दर्य उसको जीवनको कमजोरी हुन्छ तर सांसारिक छल प्रपञ्चलाई बुझ्न नसक्नाले यस्तो व्यक्तिको प्रेम जीवन दु:खान्त नै हुन्छ । यदि चन्द्र पर्वत आवश्यकताभन्दा बढी विकसित छ भने यस्तो व्यक्ति पागल हुन्छ ।

यदि चन्द्र पर्वत मध्यम स्तरसम्म विकसित भएको छ भने यस्तो व्यक्ति कल्पनालोकमा विचरण गर्ने तथा कल्पनामै महल ठड्याउने हुन्छ । उसले खाटमा बसी बसी लाखौं-करोडौं योजना बनाउँछ तर तिनमध्ये एउटा पनि पूरा हुँदैन। ती योजनालाई पूरा गर्ने साहस अथवा योग्यता उसमा हुँदैन भन्दा अत्युक्ति हुँदैन ।

यस्तो व्यक्ति साह्रै नै भावुक हुन्छ । सानो कुरा पनि उसलाई बिझ्छ । सानो व्यंग्यले पनि उसलाई पूरै ठेस लाग्छ । संघर्षको भावना नै हुँदैन भने पनि हुन्छ । विपरीत परि स्थितिमा यस्तो व्यक्ति पलायन हुन्छ र बिस्तारै बिस्तारै निराशाको भावना बढ्दछ ।

यदि चन्द्र पर्वत विकसित भएर हातको बाहिरतिर झुकेको छ भने यस्तो व्यक्तिमा रजोगुणको प्रधानता हुन्छ । ऊ भोगी, विषयी तथा कामी

हुन्छ र सुन्दर स्त्रीहरूको पछाडि व्यर्थमै लागिरहन्छ । यस्तो व्यक्तिको ध्येय भोगविलास एवं ऐश आराम हुन्छ तर जीवनमा यो सुख पनि उसलाई प्राप्त हुँदैन ।

यदि हातमा यो पर्वत शुक्रतिर झुकेको छ भने यस्तो व्यक्ति कामुक हुनाका साथसाथै निर्लज्ज पनि हुन्छ। यस्तो व्यक्तिलाई आफ्नो र अर्काको पनि हेक्का हुँदैन जसको कारण समाजमा ऊ बदनाम हुन जान्छ ।

यदि चन्द्र पर्वतमा बांगाटिङ्गा रेखाहरू फैलिएका छन् भने यस्तो व्यक्तिले धेरैपटक जलयात्रा गर्दछ । यदि चन्द्र पर्वतमा गोलो घेरा छ भने त्यस्तो व्यक्तिले राजनीतिक कार्यबाट विदेशको यात्रा गर्दछ। हातमा यदि चन्द्र पर्वतको अभाव छ भने त्यस्तो व्यक्ति रूखो एवं पूर्णत: भौतिक हुन्छ। तर जसको चन्द्र पर्वत सामान्यरूपमा विकसित छ भने त्यो आन्तरिक दृष्टिबाट अत्यन्त सुन्दर एवं समझदार हुन्छ। यदि यो पर्वत माथितिरबाट विकसित देखिन्छ छ भने उसलाई बाथ अथवा रुघा जस्ता रोग लागिरहन्छन् । यदि यो पर्वत धेरै नै विकसित छ भने त्यो व्यक्ति अस्थिर बुद्धि भएको, निराशावादी, शंकालु तथा लगभग पागलजस्तै हुन्छ । यस्तो व्यक्तिलाई टाउको दुख्ने समस्या लगातार भइरहन्छ। यदि यो पर्वत तलतिर सरेको छ भने व्यक्ति शक्तिहीन हुन्छ। यदि चन्द्र पर्वतमा शंखको चिह्न छ भने त्यस्तो व्यक्ति आफ्नै प्रयत्नबाट सफल हुन्छ तर उसको सफलतामा बारम्बार बाधा व्यवधानहरू भइरहन्छन् । यति भएर पनि उसले जीवनलाई सहीरूपमा जिउन तथा अर्कालाई सहयोग एवं सहायता दिन छोड्दैन ।

वस्तुत: हातमा भएको चन्द्र पर्वतबाट नै व्यक्ति कल्पनाप्रिय, सौन्दर्यप्रिय तथा भावुक हुन सक्दछ ।

क्रमश:

**कणकणमा गोरख जगाऔं ।**

# कास (खोकी) र यसको आयुर्वेदिक उपचार

शिशिर ऋतुमा चिसोको कारण जम्मा भएको कफ जब आदनकालको प्रारम्भसँगै सूर्यको तेजले पग्लँदै गर्दा हिमालको हिउँ पग्ले समान हाम्रो शरीरस्थित जम्मा भएको कफ पग्लन थाल्दछ र अनेकौं उपद्रवसहितको कास रोगको उत्पत्ति हुन्छ । अन्य ऋतुमा कास रोग लाग्दैन भन्ने होइन तर अनुपातको दृष्टिकोणले शिशिर र वसन्त ऋतुको सन्धिकालमा नै कास रोगको प्रकोप ज्यादा हुन्छ ।

**कास रोगको उत्पत्ति** : अत्यधिक मात्रामा रुक्ष, शीत, अल्पाहार सेवन गर्नु, उपवास बस्नु, अम्ल, विदाही, कटु, ऊष्ण आहार सेवन गर्नु, चिसो पेय पदार्थको सेवन गर्नु, चिसो पानीमा बारम्बार नुहाउनु, लामो समयदेखि घामबाट टाढा हुनु आदि कास रोग उत्पत्तिका कारण मानिन्छन् ।

एलर्जी (Allergy) लाई पनि कास रोगको एउटा कारण मानिन्छ । जस्तै: अत्यधिक धूवाँ धूलो भएमा कास स्वत: हुन्छ । लामो समयसम्म कपास कारखानामा काम गर्ने व्यक्तिलाई कास रोग हुन्छ । कास रोगले प्राय: गरेर बच्चा तथा वृद्धलाई सताउने गर्दछ ।

घाँटीमा खसखस उत्पन्न हुनु, चिलाउनु र कुनै वस्तु अड्किएको जस्तो हुनुले कास रोगको उत्पत्ति हुन लागेको भान गराउँछ ।

## कास रोगका प्रकार र उपचार :

कास रोग पाँच प्रकारका हुन्छन् । १. वातज २. पित्तज ३. कफज ४. क्षतज र ५. क्षयज आदि ।

१.**वातज कास** : यस प्रकारको कासमा कञ्चट, टाउको, मुटु, करङ्ग र पेटमा शूल हुन्छ, मुख सुक्छ र मलीन देखिन्छ । शरीरको बल र ओज कम भएर बस्छ । सुख्खा खोकी लगातार आइरहन्छ । खोक्दा मुस्किलले कफ निस्कन्छ । घाँटी बस्छ र बोली नबुझिने हुन्छ । चिल्लो, अमिलो, नुनिलो वा तातो कुरा खाने बित्तिकै वातज खोकी कम भएर जान्छ । तर भोजनको पाचन हुने बित्तिकै वायु फेरि बलवान् भएर आउँछ र खोकी आउन थाल्दछ । यसलाई सुख्खा खोकी, लहरे खोकी वा Whooping cough पनि भन्न सकिन्छ ।

**चिकित्सा** : उचित किसिमको घिउ वा तेल मिश्रित ऊष्ण वीर्य (Potency) प्रधान औषध द्रव्यको सेवनले कासमा आराम मिल्दछ । जस्तै, पिपल्यादि घृत, शुण्ठी पाक, त्रिकटु मिश्रित अवलेह आदि ।

२. **पित्तज कास** : खोक्दा पहेँलो कफ निस्कने, ज्वर, दाह उत्पन्न हुने, मुखको स्वाद तीतो हुने, आँसु, पसिना आउने कास नै पित्तज कास हो । तातो, पिरो, अमिलो र क्षारयुक्त खाने कुरा बढी मात्रामा सधैं सेवन गर्ने अथवा आगो, घामको सम्पर्कमा बढी समयसम्म बस्ने मानिसलाई यो खोकी हुन्छ ।

**चिकित्सा** : गुलियो तथा शीत वीर्यप्रधान औषध द्रव्यको सेवनबाट यसमा लाभ मिल्दछ । राजवृक्षको बीज मज्जाबाट विरेचन गराएर यष्ठी मधु, वासाबाट बनेका औषध योग सेवन गर्नाले पित्तज कास सन्चो हुन्छ । सीतोपलादि चूर्ण १ देखि २ ग्राम पित्तज कासमा विशेष लाभकर हुन्छ ।

३. **कफज कास** : गुलियो, चिल्लो र भारी खाना खाइरहने र परिश्रम कम गर्ने मानिसमा कफ बढेर वायुको मार्ग रोकिदिन्छ र कफज कास उत्पन्न हुन्छ । खोकीको वेग कम हुने, खोक्दा सेतो तथा गहन कफ आउने कास नै कफज कास हो । यस प्रकारको खोकीमा कफको मात्रा अत्यधिक हुन्छ र शरीरमा शिथिलता व्याप्त हुन्छ ।

**चिकित्सा** : पचाउने गुण भएका तथा क्षारीयपना ज्यादा भएका द्रव्यहरूको सेवनले कफज कासमा राहत मिल्दछ । दुई चम्चा अदुवाको रससँग मह मिलाएर सेवन गर्नाले कफज कासमा ज्यादा फाइदा हुन्छ । आसव अरिष्ट सेवन गर्नु यसमा लाभदायक हुन्छ ।

४. **क्षतज कास** : यस प्रकारको खोकीमा खोकीको साथमा रगत देखा पर्दछ । लगातार खोक्दा वा कुनै वस्तुले क्षत (चोटपटक) लाग्दा खोकीमा रगत आउँछ । सकी नसकी गह्रुङ्गो भारी बोक्ने, पैदल हिँड्ने, अति मैथुन गर्ने व्यक्तिको छातीमा घाउ हुन्छ । त्यहाँ कुपित वायुले असर गर्दा क्षतज कास हुन्छ ।

**उपचार** : गुलियो, शीतप्रधान, बलकारक औषधिको सेवनबाट क्षतज कास रोगमा लाभ पुग्दछ । जस्तै: वासा घृत, द्राक्षादि चूर्ण यसमा फाइदाजनक हुन्छ ।

**५. क्षयज कास** : विषम, असात्म्य भोजन सेवन गर्नाले, अत्यधिक श्रम, परिश्रम, मैथुन गर्नाले, शरीरमा आवश्यक पोषक पदार्थको अभावले क्षयज कास उत्पन्न हुन्छ । यसलाई टि.बी. (Tuberculosis) सँग तुलना गर्न सकिन्छ । रोगीले खोक्दा दुर्गन्ध आउने, हरियो वा रातो रङको पीपजस्तो कफ निस्कन्छ । खोक्दा-खोक्दा मुटु नै खस्न लागे जस्तो भान हुन्छ । खाने कुरा निकै बढी खाए पनि शरीर दुब्लो नै रहन्छ ।

**उपचार** :

१. च्यवनप्राशलगायतका रसायन द्रव्यको सेवन गर्नु यसमा ज्यादै लाभदायक मानिन्छ ।

२. रस, रक्तादि धातु वृद्धि गर्ने जुनसुकै खाद्य पदार्थ उपयोग गर्न सकिन्छ । टि.बी. (Tuberculosis) को पूर्ण उपचारको लागि DOTS प्रविधिबाट सूत्रबद्ध गरिएको औषधि सेवन गर्नुपर्दछ ।

जय गुरुदेव !

# आयुर्वेदाचार्य डा. नारायणदत्त श्रीमालीज्यू

परमपूज्य सद्गुरुदेवले बताउनुभएको छ कि चिकित्सकले औषधीबाट बाह्य शरीरको चिकित्सा त गर्दछ तर रोगले सीधै आन्तरिक शरीरलाई प्रभावित गर्दछ । यसैले आजकालका औषधिहरूबाट पूर्ण चिकित्सा सम्भव छैन । पूज्य गुरुदेवले धेरैलाई निरोग गर्नुभएको छ भने आयुर्वेदमा वर्णित ६४ दिव्यौषधिको प्रामाणिकताका साथ खोज गरेर त्यसको लाभ तथा प्रयोगबाट सबैलाई अवगत गराएर रोगोपचारक तथा आयुर्वेदाचार्यहरूको कल्याण पनि गर्नुभएको छ। पूज्य गुरुदेवले आयुर्वेदलाई नयाँ आयाम दिनुभएको छ । कायाकल्पका लागि उहाँले सबैको लाभार्थ धेरै नै प्रयोग पत्रिकामा प्रकाशित गर्नुभएको छ । ती प्रकाशित प्रयोगमध्ये श्री मोदक यस्तो विधान हो जुन वास्तवमा स्पष्ट हुन पाइरहेको थिएन, यसलाई यति सरलरूपमा स्पष्ट गर्नु केवल गुरुदेवको मात्रै वशको कुरा थियो ।

मौदगल उपनिषद्मा महर्षि मुद्गलले पूर्ण विवेचना गर्दै लेख्नुभएको छ कि गर्भमा नै मनुष्यको पूर्ण निर्माण हुन्छ र त्यसको लागि एक्काइस महिनाको गर्भ धारण गर्नुपर्दछ। परमपूज्य गुरुदेवको यो वचनलाई सुनेर सुभद्रा नामकी एउटी महिलाले आफ्ना पतिका साथ उपस्थित भएर यस प्रकारको गर्भ धारणका लागि आग्रह गरिन् । गुरुदेवले दुई महिनासम्म त केही बोल्नुभएन । पछि उहाँले भन्नुभयो– हरिद्वारमा दुई वर्षसम्म दुवै दम्पत्ति बस्नुपर्दछ । सुभद्राले त्यस कुरालाई स्वीकार गरिन् । पन्ध्र दिनपछि गुरुदेवले एघार प्रकारका जडिबुटी मिलाएर त्यसबाट इन्द्रसंहितामा वर्णित अश्वनी आहारा बनाएर खान दिनुभयो । सुभद्रा भन्छिन्– हामी पति-पत्नी ऋषिकेशमा गंगाको किनारमा गएर बस्न लाग्यौं । समयमा गर्भ धारणपछि मेरो शरीर र अनुहारको सुन्दरतामा उत्तरोत्तर वृद्धि हुँदै गयो । मलाई यसबाट आश्चर्य त लागेन तर म स्वयं रोमांचित र गौरवान्वित अनुभव गरिरहेको थिएँ । बिस्तारै बिस्तारै एक्काइस महिना बित्यो । मलाई अलिकति पनि भारीपन वा कष्ट कहिले पनि अनुभव भएन । मैले एक श्रेष्ठ र पुष्ट बालकलाई जन्म दिएँ । जब बालक ऋषिकुमार पाँच छ वर्षका थिए, तब उनलाई धेरै ग्रन्थ कण्ठस्थ थिए तथा उनले धाराप्रवाहरूपमा घण्टौं प्रवचन गर्दै रहन्थे । ऋषिलाई जन्म दिएर मैले आफूलाई सौभाग्यशाली ठानें ।

अर्को प्रसंग

परमपूज्य गुरुदेव आयुर्वेदका अन्यतम आचार्य हुनुहुन्छ। उहाँको चरणमा बसेर हामीले पनि यस सागरबाट केही थोपा प्राप्त गर्नै पर्दछ । सन् १९९५ मा जोधपुरमा एउटा प्रयोग सम्पन्न भयो । करिब साठी वर्षकी कृष्णा नामकी एउटी गुरु बहिनी शिविरमा सेवा कार्यका लागि बारम्बार आउने गर्थिन् । उनको रङ तावाजस्तै कालो र अनुहार चाउरिएको थियो । उनले ठठ्टामा भनिन्– मैले त जीवनमा गोरोपना के हो देखेकी नै छैन ।

## परमपूज्य सद्गुरुदेवको अवतरण यात्रा

**यस स्तम्भअन्तर्गत परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको रहस्य नै रहस्यले भरिएको अवतरण यात्रालाई क्रमशः प्रकाशित गर्दै आएका छौं । आशा छ यसबाट पाठकवर्ग लाभान्वित हुनुहुनेछ ।**

पूज्य गुरुदेवले कृपा गरेर गोरांगना क्रीम अनुहार तथा हातमा लगाउनका लागि उनलाई दिनुभयो । केही क्रीमलाई डिब्बामा राखेर उनलाई दिनुहुँदै गुरुदेवले भन्नुभयो– राति सुत्ने बेलामा पनि यसको प्रयोग अनुहार तथा हातमा गर्नू । उनले घर गएर गुरुदेवले भन्नु भए जस्तै गरिन् ।

भोलिपल्ट जब उनले स्नान गरिन् तब ऐनामा आफ्नो अनुहार देखेर दङ्ग परिन् । उनको कालो अनुहार गोरो भइसकेको थियो । यसभन्दा ठूलो आश्चर्य त यो थियो कि सबै चाउरीपना हटिसकेको थियो, उनको शरीर उमेरको कारणले दुब्लो, कमजोर तथा वृद्ध देखिइसकेको भए पनि अनुहार भने भर्खर बीस वर्षीया युवतीको झैं देखिन्थ्यो ।

यस प्रयोगलाई सम्पन्न गरेको धेरै समय भइसकेको छ ती कृष्णा बहिनीको पाउ तथा बाँकी शरीरको रङ कालो तर अनुहारको रङ भने गोरो, आकर्षक र सौन्दर्ययुक्त रहिरहेको छ । वास्तवमा पूज्य गुरुदेव आयुर्वेदका अत्यतम आचार्य हुनुहुन्छ । रोग निवारणार्थ पूज्य गुरुदेव धन्वन्तरी दीक्षाद्वारा आफ्नो तपस्यांश प्रदान गर्नुहुन्छ । सबै प्रकारका रोगहरूबाट मुक्तिका लागि यो दीक्षा प्राप्त हुनु सौभाग्य हो ।

जय गुरुदेव !

# कब्जियत र योग

कब्जियत आधुनिक युगको लागि अभिशाप बन्दै गइरहेको छ । कब्जियत धेरै कारणहरूबाट उत्पन्न हुन सक्ने हुनाले धेरै मानिसहरू यसबाट पीडित भएका पाइन्छन् । मूलत: कृत्रिम जीवनशैलीलाई नै यस रोगको प्रमुख कारणको रूपमा लिन सकिन्छ । एक हप्तामा तीनपटक वा सो भन्दा कम कडा (साह्रो) दिसा हुनुलाई कब्जियत (Constipation) भनिन्छ । यस अवस्थामा आन्द्राको चाल राम्रोसँग हुँदैन । पेटमा गह्रौं वस्तु बसेको अनुभव हुन्छ, पेट दुख्छ, नमिठो डकार आउँछ, कडा एवं सुकेको दिसा थोरै मात्र आउँछ । यदि कब्जियतसँगै बान्ता पनि हुन्छ भने यो कब्जियतको सिकिस्त अवस्था हो भनी बुझ्नुपर्दछ ।

**कब्जियतका कारणहरु :**

–दिसा नियमित नहुनु ।

–खानामा रेशादार खाद्य वस्तु (सागसब्जी) को कमी हुनु । –आमाशयमा, कलेजोमा पाचक रसहरू पर्याप्त मात्रामा ननिस्कनु ।

–मानसिक गडबडी (Psychogenic disorders) भएमा जस्तै: बढी सोच्ने, चिन्ता लिने, डिप्रेशन आदि भएमा ।

–आन्द्राको क्षयरोग वा क्यान्सर (Tuberculosis or cancer) को कारणले गर्दा ।

–आन्द्रामा पचेको अन्न बग्न बाधा (Obstructive disease) उत्पन्न भएमा ।

–पाचन प्रणाली तथा गुदद्वारसम्बन्धी शल्यक्रिया गरेपछि ।

–धेरै चिल्लो तथा कृत्रिम खानाहरू, मैदा तथा यसबाट बनेका परिकारहरूको ज्यादा उपयोग गर्नाले ।

–आवश्यक मात्रामा शारीरिक व्यायाम नपुगेमा, विलासितामय जीवन भएमा ।

–लामो समयसम्म बिछ्यौनामा परेमा ।

–रगतमा चिनीको मात्रा बढी (Hyperglycaemia) भएमा ।

–कतिपय औषधिहरूको पार्श्व-असरका कारण पनि कब्जियत हुन्छ । जस्तै: निद्राका गोलीहरू धेरै समयसम्म सेवन गरेमा, कोडिन, आल्मुनियम जातका एन्टासिडहरू, उदासीपनको औषधि (Antidepressants), पिसाब लगाउने औषधिहरू (Diuretics) धेरै प्रयोग गरेमा ।

यी कारणहरू बाहेक अर्को मुख्य कारण हो- पाचन प्रणालीमा काम गर्ने चेष्टावह नाडीमा खराबी उत्पन्न हुनु । जसका कारण आन्द्राको चाल Peristaltic movement राम्रोसँग हुन सक्दैन जसबाट कब्जियत हुन्छ । पाचक रसलाई स्राव गराउने नाडीमा खराबी भएमा ती ग्रन्थिहरूसम्बन्धी रोग लागेमा पनि पर्याप्त रस स्राव हुन सक्दैन र कब्जियत उत्पन्न हुन्छ ।

**उपचार :**

–सर्वप्रथम त कब्जियत के कारणले भइरहेको छ, उक्त कारण पत्ता लगाएर सर्वप्रथम त्यसको उपचार गर्नुपर्दछ ।

–कतिपय कारणहरूको उपचार आयुर्वेद औषधि, योग वा एलोप्याथिक एकल उपचारले मात्र ठीक नहुन सक्दछ । त्यसका लागि उपयुक्त उपचार पद्धतिको छनौट भने आफैले गर्नुपर्दछ ।

–प्राकृतिक जीवनशैली अपनाउने ।

–कृत्रिम खानाभन्दा पनि रेशादार खानाहरू, एकपटक मात्र कुटेको चामल, सागपात, लौका, फलफूल र झोल पदार्थहरू बढी मात्रामा सेवन गर्ने ।

–नियमित योगाभ्यास गर्ने, दैनिक एकदेखि दुई कि.मी. यात्रा गर्ने तथा समय समयमा शरीर शोधन गर्ने ।

–त्रिफला चूर्ण, पञ्चसकार, एरण्ड तैल, ईशबगोलको सेवन पूर्ण लाभदायक हुन्छ ।

–प्रात: ब्रह्ममुहूर्तमा उठेर शरीरको क्षमताअनुसार पानी पिउने ।

**योग प्राणायाम** : कब्जियत नाश गर्नमा योगासन र प्राणायामले धेरै सहयोग पुऱ्याउँदछ । स्वस्थ हुँदाको अवस्थामा नै नियमित योगाभ्यास गरेमा यस रोगबाट सजिलै बच्न सकिन्छ । पाचन प्रणालीको व्यायाम गराउने धेरै प्रकारका प्रणायाम तथा आसनहरू छन् । यसबाट सुषुप्त अवस्थामा रहेको आन्द्रा (Intestine) को गति बढाउनमा मद्दत पुग्दछ, पाचक रस स्राव गराउने ग्रन्थिहरूलाई सक्रिय बनाउँछ, खाना पचाउन मद्दत गर्दछ ।

ताडासन, तीर्यक ताडासन, कटी चक्रासन, सूर्य नमस्कार, पवनमुक्तासनहरू, शशाङ्कासन, उष्ट्रासन, त्रिकोणासन, योगमुद्रासन, मत्स्यासन, अगाडि र पछाडि झुकेर गरिने सम्पूर्ण प्रकारका आसनहरू, हलासन, नौकासन, द्रुत हलासन, भुजङ्गासन, मण्डुकासन, मेरुदण्ड मर्काएर गरिने सम्पूर्ण आसनहरू आदि कब्जियत नाशका लागि लाभदायक छन् । साथै

खाना खाइसकेपछि कम्तिमा १० मिनेट वज्रासनमा बस्दा पनि खाना पाचनमा मद्दत पुग्दछ ।

प्राणायामहरूमा भस्त्रिका, कपालभाती विशेष गरी लाभदायक छन् । (**सावधानी :** *योग अभ्यास गर्दा तथा आयुर्वेद औषधिहरूको सेवन गर्दा विज्ञको सल्लाह लिएर मात्र अगाडि बढ्नुहोला ।*) जय गुरुदेव !

*सन्दर्भ ग्रन्थहरू : आरोग्य विज्ञान,खप्तड बाबा, आसन प्राणायाम मुद्रा बन्ध, स्वामी सत्यानन्द सरस्वती, योग साधना व योग चिकित्सा रहस्य स्वामी रामदेव*

## मासिक हवन कार्यक्रम

परमपूज्य सद्गुरुदेवहरूको कृपा, अनुकम्पा र आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिना सञ्चालन गर्दै आइरहेको मासिक हवन कार्यक्रमहरूअन्तर्गत चैत्र ३ गते सोमबार पशुपति मृगस्थलीमा रहेको गुरु गोरखनाथको मन्दिर परिसरमा श्री शिव गोरक्ष हवन, चैत्र ४ गते मंगलबार लगनखेलस्थित वटुक भैरव मन्दिर परिसरमा तान्त्रोक्त वटुक भैरव हवन, चैत्र ५ गते बुधबार लगनखेलस्थित महालक्ष्मी मन्दिर प्रांगणमा तान्त्रोक्त महालक्ष्मी हवन, चैत्र ६ गते बिहीबार ललितपुरको कुम्भेश्वरस्थित बगलामुखी मन्दिर प्रांगणमा तान्त्रोक्त बगलामुखी हवन सम्पन्न गऱ्यो । साधक साधिकाहरू र अन्य भक्तजनहरूका बीच सम्पन्न हुँदै आएका यी हवन कार्यक्रमहरूमध्ये तान्त्रोक्त वटुक भैरव हवन बिहान ७:०० बजे सञ्चालन हुने गरेको छ भने अन्य हवन कार्यक्रमहरू बिहान ८:०० बजे सञ्चालन हुँदै आइरहेका छन् ।

यस्तै मासिक हवनकै शृङ्खलामा सम्पर्क कार्यालय पोखरा, रामघाटको आयोजनामा महिनाको पहिलो बुधबार अर्थात् चैत्र ५ गते स्थानीय विन्ध्यवासिनी मन्दिर परिसरमा तान्त्रोक्त विन्ध्यवासिनी हवन सम्पन्न भयो । यता सम्पर्क कार्यालय तनहुँको आयोजनामा पहिलो बिहीबार अर्थात् चैत्र ६ गते स्थानीय वेदव्यास गुफा परिसरमा तान्त्रोक्त महर्षि वेदव्यास हवन सम्पन्न भयो । पोखरा र तनहुँमा सम्पन्न हुने यी हवनहरू पनि बिहान ८:०० बजे सञ्चालन हुने गर्दछन् ।

## दिव्य गुरु महोत्सव

परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको अवतरण भएको पावन दिन अंग्रेजी महिनाको २१ तारीखलाई दिव्य गुरु महोत्सवको रूपमा मनाउँदै आउने क्रममा सिद्धाश्रम शक्ति केन्द्र (सिशके) ले गत चैत्र महिनाको ८ गते शनिबार कार्यक्रमलाई भव्यरूपमा सम्पन्न गरेको छ । सिशकेको व्यवस्थापनमा सञ्चालन भइरहेको बसुन्धरास्थित गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा उक्त कार्यक्रम आयोजना भएको थियो । बिहान १०:१५ बजे परमपूज्य सद्गुरुदेवहरूको प्रार्थना, गोरक्ष निखिल स्तवनको सस्वर पाठबाट शुभारम्भ भएको उक्त कार्यक्रम दुई चरणमा विभाजित थियो ।

कार्यक्रमको पहिलो चरणमा गुरु पादुका पूजन, मन्त्र जप/ध्यान, हवन, आरती आदि कार्यक्रमहरू रहेका थिए । कार्यक्रममा गुरु पादुकाको पूजन गर्ने सौभाग्य प्रसाद वितरणको अभिभारा वहन गर्दै साधक दामोदर गौतम, साधिका भवानी गौतम, साधक बलराम कार्की र साधिका शारदा कार्कीले पाउनु भएको थियो ।

कार्यक्रमको दोस्रो चरणमा सिशकेको तर्फबाट गुरुसेवा दल नं २८ का सदस्य साधक मुकेश धितालले स्वागत मन्तव्य राख्नुभएको थियो । दोस्रो चरणका अन्य क्रमहरूमा भजन-कीर्तन, पुरस्कार वितरण, प्रवचन आदि रहेका थिए । स्ववचन एवं प्रवचनको क्रममा सावर पन्थी नं. २ का सदस्यले वास्तविक सुख र आनन्दको स्रोत सद्गुरुदेव नै हनुहुन्छ । उहाँलाई प्राप्त गर्न आफ्नो आत्माले निर्देश गरेको दिशा र मार्गलाई अनुशरण गर्नुपर्छ । यो क्षणभंगुर जीवनको कुनै भर छैन, जीवन छँदै समयको सदुपयोग गरेर यो जुनीलाई धन्य बनाउनु पर्ने कुरा व्यक्त गर्नुभएको थियो ।

महोत्सवमा मासिक प्रकाशन गोरक्ष निखिल वाणीको २० जना सदस्य बनाएर साधक टोपबहादुर बस्नेत तथा साधिकाहरू रचना सिखडा र शोभा ज्ञवालीले परमपूज्य सद्गुरुदेवप्रदत्त 'विशेष धारण माला' पुरस्कारस्वरूप प्राप्त गर्नुभएको थियो । सो कार्यक्रम सावर पन्थी नं. ३ का सदस्यज्यूले सञ्चालन गर्नुभएको थियो । कार्यक्रम समापनलगत्तै प्रशस्त वर्षा भएको थियो । यसबाट लामो समयदेखि अनावृष्टि हट्न पुगेको थियो ।

दिव्य गुरु महोत्सवलाई सि.श.के. केन्द्रीय कार्यालयका अलावा यसका सम्पर्क कार्यालयहरूमा पनि भव्यरूपमा मनाइँदै आइएको छ ।

## पोखरामा विशेष धारण माला वितरण

सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय रामघाट, पोखरामा गोरक्ष निखिल वाणी पत्रिकाको सदस्यता विस्तार अभियानमा योगदान पुऱ्याउनु हुने साधक-साधिकाहरूलाई गत चैत्र ८ गते दिव्य गुरु महोत्सवको शुभ अवसरमा पुरस्कारस्वरूप सद्गुरुदेवप्रदत्त विशेष धारण माला वितरण गरियो । पुरस्कार प्राप्त गर्नुहुनेहरूमा १०० जना वार्षिक सदस्य बनाएर साधिका विष्णु पराजुली, ५० जना सदस्य बनाएर साधिका योगमाया के.सी. तथा २० जना सदस्य बनाएर साधक बसन्त बराल र साधिकाहरू जमुना पराजुली, मीना खड्का, हिमालभवानी जोशी, जानुका के.सी. र ज्योति गुरुङ्ग हुनुहुन्थ्यो ।

## का.स.स. ग र घ को तालिम सम्पन्न

परमपूज्य सद्गुरुदेवहरूको कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले गत चैत्र २० र २१ गते कार्यकर्ता सहायक समूह 'ग' र 'घ'का लागि तालिम तथा प्रशिक्षण कार्यक्रम सम्पन्न गऱ्यो । काठमाडौँको धापासीमा सम्पन्न भएको उक्त तालिममा सहभागी हुन विभिन्न जिल्लाहरूबाट कार्यकर्ताहरू आउनुभएको थियो । उक्त कार्यक्रमहरूमा 'ग'को तालिम बिहान ६:३० बजे र 'घ'को बिहान ११:३० बजेबाट प्रार्थनाबाट शुभारम्भ भई सद्गुरुदेवहरूको स्तुति वन्दना, गुरु पूजन सम्पन्न भएपछि विभिन्न विषयमा प्रशिक्षण सम्पन्न भएर बिहान ११:०० बजे र बेलुकी ५:०० बजेको गुरु आरतीपश्चात् सम्पन्न भएको थियो । कार्यक्रममा बीचबीचमा भजन, नृत्य आदि क्रमहरू पनि समावेश भएका थिए ।

तालिममा गुरु पूजनको क्रममा पहिलो दिन ग समूहमा ज्ञानेन्द्र श्रेष्ठ, बनु श्रेष्ठ, डालिका मिजार, गौरीदेवी ज्ञवालीले तथा दोस्रो दिन सूर्यमाया थापा, शर्मिला योगी, मीना योगी, दिनेश थापा, सूर्य लामा र नन्दमाया सिटौलाले गुरु पूजन गर्नुभएको थियो भने घ समूहमा पहिलो दिन सविता सुनुवार, रामचन्द्र दवाडी, सुशिला श्रेष्ठ, अजितमान श्रेष्ठले तथा दोस्रो दिन गोमा हाडा, बीमाया गुरुङ्ग, कल्याणी श्रेष्ठ, निशा ढकाल, जुनी कुमालले गुरु पूजन गर्ने सौभाग्य प्राप्त गर्नुभएको थियो । कार्यक्रममा सुनाइएको ग्रेडिङअनुसार कार्यकर्ताहरू मालती लुंगेली मगर, विन्दु श्रेष्ठ, लक्ष्मी सुवेदी, दिनेश थापा, जीवन कक्षपति, देवबहादुर कार्की, रेणुका प्रसाईं, खड्गबहादुर सुनुवार, होमबहादुर थापा (२) र मीना योगी का.स.स.'ग'बाट प्रगति गरेर का.स.स. क मा पदोन्नत हुनु भएको थियो भने का.स.स.'घ'बाट विकसित भई का.स.स.'ग' मा प्रवेश गर्नेहरूमा ताराबहादुर थापामगर, रामकला कार्की, रुस्मिता श्रेष्ठ, सावित्री सेन, रस्मिला सुवेदी, लक्ष्मी पाण्डे, थमबहादुर मगर, पुण्यप्रसाद अर्याल, मिठु थापा, धर्मकुमारी बास्तोला, शान्ति पौडेल, पार्वती गौतम, विन्दु केसी, दुर्गादेवी तिमिल्सिना, राधा गौतम, शर्मिला केसी, लक्ष्मी थापा क्षेत्री, निशा ढकाल, शोभा तण्डुकार र ज्ञानबहादुर बास्तोला हुनुहुन्थ्यो ।

**समवेदना**

**जन्म १९९१ वैशाख १७** **स्वर्गारोहण २०६५ चैत्र २**

**स्वर्गीय रत्नकुमारी थापा मगर**

श्रीमती रत्नकुमारी थापा मगरको असामयिक निधन भएकोमा दिवंगत आत्माले चीर शान्ति प्राप्त गरोस् भनी सद्गुरुदेवहरूसमक्ष प्रार्थना गर्दै शोक सन्तप्त परिवारजनप्रति हार्दिक समवेदना प्रकट गर्दछौं ।

**सिद्धाश्रम शक्ति केन्द्र, सम्पर्क कार्यालय सिन्धुली**

## मिड टर्म तालिम सम्पन्न

सिद्धाश्रम शक्ति केन्द्रले गत चैत्र १ गते गुरु सेवा दलका लागि पहिलो पटक मिड टर्म तालिम सम्पन्न गऱ्यो । काठमाडौँको बसुन्धरामा रहेको गो.नि.ज्यो.दि.वि.मा सम्पन्न उक्त तालिम बिहान १०:३० बजे शुरु भएर साँझ ४:०० बजेसम्म चलेको थियो । तालिममा सावर पन्थी १, २, ३ र सावर मातृकाज्यूले आन्तरिक र बाह्य संगठन, व्यवहारिक र संस्थागत कार्य, प्रशासन आदि विषयमा प्रशिक्षण दिनुभएको थियो । प्रशिक्षार्थीहरूलाई विशेष ध्यान पनि प्राप्त भएको थियो । तालिमा सा.प. सदस्यज्यूहरूले गुरु सेवा दलका पदोन्नत सदस्यहरूलाई पोशाक वितरण गर्नुभएको थियो । उक्त अवसरमा साधक जयलाल गुरुङ निखिल रङ, साधिकाहरू कोपिला थापा, अनु श्रेष्ठ, साधक होमबहादुर थापा वैकल्पिक निखिल रङ, साधकहरू माधवप्रसाद ढकाल, रामचन्द्र लोहनी, साधिका मुना राई, साधक निमप्रसाद ढकाल वैकल्पिक गोरक्ष रङ, साधकहरू गोपालबाबु तिवारी, सिद्धि महर्जन, बालकृष्ण श्रेष्ठ वैकल्पिक रातो रङ, साधकहरू मदनलाल श्रेष्ठ, प्रभुसुन्दर श्रेष्ठ, साधिका निता प्याकुरेल वैकल्पिक निलो रङ र साधक लक्ष्मण कार्की, साधिका मधुमति रंजित, साधक किशोर श्रेष्ठलाई हरियो रङको पोशाक वितरण गरिएको थियो ।

**श्रद्धाञ्जली**

**स्वर्गीय ज्ञानी कार्की**

**हाम्री आमा/ हजुरआमा ज्ञानी कार्कीको ९३ वर्षको उमेरमा स्वर्गारोहण भएकोमा उहाँप्रति हार्दिक श्रद्धाञ्जली अर्पण गर्दै दिवंगत आत्माको चीर शान्तिको कामना गर्दछौं ।**

बलराम कार्की/शारदा कार्की (छोरा बुहारी), शिवराम कार्की (छोरा बुहारी), हरिबहादुर कार्की (छोरा बुहारी), ठाकुरबहादुर कार्की (भतिजा), मधुबहादुर कार्की (भतिजा), लक्ष्मण कार्की (नाति), कुलबहादुर कार्की (नाति), केशव चालिसे, द्वारिका चालिसे, पुष्कर चालिसे तथा सिमलटार आरती सञ्चालन केन्द्र

## विन्ध्यवासिनी स.का.ले मनायो वार्षिकोत्सव

सि.श.के. सम्पर्क कार्यालय विन्ध्यवासिनीले आफ्नो तेस्रो वार्षिकोत्सव गत चैत्र १ गते मनायो । दिउँसो ३ बजेदेखि ५ बजेसम्म भजन-कीर्तन एवं नृत्य सम्पन्न भएको थियो । साथै दैनिक आरतीपछि दीपावली पनि गरिएको थियो ।

## मन्दिर सफाइ कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्र आरती संचालन केन्द्र, कीर्तिपुरको सक्रियतामा २०६५ साल चैत्र १ गते कीर्तिपुर चोभारस्थित आदिनाथ मन्दिरको सफाइ कार्यक्रम सम्पन्न भयो ।

## पोखरामा होली र वनभोज

सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय पोखराले फागुण २७ गते मंगलबार होली मनाउँदै वनभोज कार्यक्रम सम्पन्न गऱ्यो । रामघाटस्थित नरनारायण मन्दिर प्राङ्गणमा बिहान १० बजेबाट शुरु भएर ५:०० बजेसम्म चलेको उक्त कार्यक्रम अबीर तथा रङको आदान-प्रदान एवं भजन-कीर्तनमा नृत्य गर्दै हर्सोल्लासका साथ मनाइएको थियो । उक्त कार्यक्रममा सि.श.के. कास्की जिल्लाका संयोजक सावर पन्थी नं. ३ का सदस्यज्यूको पनि उपस्थिति रहेको थियो ।

**थाहा पाउनु भयो ?**

**विक्रम सम्वत् २०६६ सालको क्यालेण्डर प्रकाशित भैसक्यो नि ।**
**प्राप्त गर्नका लागि सिद्धाश्रम शक्ति केन्द्रमा सम्पर्क राख्नुहोस् है ।**



नववर्ष २०६६ तथा परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूको ७६ औं अवतरण दिवसको शुभ उपलक्ष्यमा सिद्धाश्रम शक्ति केन्द्रका कार्यकर्ता, साधक-साधिका, भक्तजन तथा देशवासीमा हार्दिक **मंगलमय शुभकामना** व्यक्त गर्दछु।

**ध्रुव पराजुली**, कोटेश्वर, कठमाडौं



नववर्ष २०६६, परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूको ७६औं अवतरण दिवस, सिद्धाश्रम शक्ति केन्द्रको दशौं वार्षिकोत्सव, छैठौं रोट महोत्सव एवं गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम चौथौ वार्षिकोत्सवको पावन अवसरमा सम्पूर्ण साधक-साधिका एवं भक्तजनलाई गोरक्ष निखिल युग स्थापनाको महान् कार्यमा तन, मन र आत्मादेखि नै समर्पित हुने प्रेरणा सदैव प्राप्त भइरहोस् भनी परमपूज्य सद्गुरुदेवसमक्ष हार्दिक प्रार्थना गर्दछौं ।

महेश आचार्य — विभास आचार्य
सबिना आचार्य — विदित आचार्य

अनुशासन र नैतिकता विहीन व्यक्ति पशु भन्दा पनि तुच्छ हुन्छ । यसैले राष्ट्रिय जीवनका हरेक आयामहरूमा उदाहरणीय अनुशासन र नैतिकता कायम गर्न आजैदेखि आफैँबाट त्यसको शुरूवात गरौं ।

नेपाल सरकार

**सूचना तथा सञ्चार मन्त्रालय**

सूचना विभाग

# गुरु गीता

**आत्मीय पाठकवर्ग, गुरुको महिमा र महत्त्वको बारेमा शास्त्रले उल्लेख गरेका विषयहरूलाई जनसमक्ष उजागर गर्दै गुरुप्रतिको सच्चा भाव र भक्ति जागृत गर्ने उद्देश्यले यस स्तम्भअन्तर्गत अर्थसहित प्रकाशित गर्दै आइरहेका छौं ।**

**शिवपूजारतो वापि**
**विष्णु पूजारतोऽथवा**
**गुरुतत्व विहीनश्चेत्**
**तत्सर्वं व्यर्थमेव हि ॥१५३॥**

भावार्थ : चाहे कोही शिवका उपासक हुन् वा कसैले विष्णुको आराधना गरून्, यदि कोही गुरु तत्त्वसँग अनभिज्ञ छ भने उसको आराधना र पूजा व्यर्थ छ किनभने शिव र विष्णुको आराधनाको मूल स्रोत गुरुत्व नै हो । कुनै पनि देवता चाहे शिव हुन् अथवा विष्णु, विग्रह धारण गरेर शिष्यको सामुन्ने आएमा पनि शिष्यले बुझ्न सक्दैन किनभने शिष्यलाई उहाँहरूलाई बुझ्ने ज्ञान त गुरुबाटै प्राप्त हुन सक्छ, तसर्थ, गुरु बढी महिमावान् हुनुहुन्छ ।

**सर्वं स्यात्सफलं कर्म**
**गुरुदीक्षा प्रभावतः ।**
**गुरुलाभात् सर्वलाभो**
**गुरुहीनस्तु बालिशः ॥१५४॥**

भावार्थ : गुरु दीक्षाको प्रभावले व्यक्तिका प्रत्येक कार्यहरू सिद्ध वा सफल हुन जान्छन् । गुरु प्राप्ति भएपछि सब थोक प्राप्त हुन्छ। गुरुरहित व्यक्ति व्यर्थ मानिन्छ। मनुष्य जीवनमा गुरुको खोज नै उसको लक्ष्य हो । मार्गदर्शकको रूपमा अनुकूल गुरु प्राप्त भएपछि साधक वा शिष्यको मनको पिपासा गुरुको प्रभावले स्वतः शान्त हुन जान्छ, उसको भट्किने प्रवृत्ति, उसको चञ्चलता, उसको उद्वेग सबै बिस्तारै बिस्तारै शान्त हुन जान्छन् ।

**गुरुहीनः पशुः कीटः**
**पतंगो वक्तुमर्हति ।**
**शिवरुपं स्वरुपं च**
**न जानाति यतस्स्वयम् ॥१५५॥**

भावार्थ : गुरुरहित व्यक्ति कीरा-फट्याङ्ग्रा समान हुन्छ । यस प्रकारको व्यक्तिले शिवस्वरूप गुरुलाई र आफ्नै स्वरूपलाई चिन्न सक्दैन किनभने पशु र कीरा-फट्याङ्ग्राको जीवन ज्यादै निम्न हुन्छ, उनीहरूको जीवनमा कुनै चिन्तन, कुनै विचार तथा कुनै खोज हुँदैन । उदात्त जीवनको प्राप्ति त केवल मानव जीवनमा नै सम्भव छ, तथा मनुष्य जीवन प्राप्त भएमा गुरुको सान्निध्य अपेक्षित छ ।

**तस्मात् सर्वप्रयत्नेन**
**सर्वसंग विवर्जितः ।**
**विहाय शास्त्रजालानि**
**गुरुमेव समाश्रयेत् ॥१५६॥**

भावार्थ : तसर्थ, सांसारिक मोहजालबाट छुट्कारा पाएर, शास्त्रहरूको विसंगतिपूर्ण विचारहरूबाट टाढा रहेर, हरेक किसिमले गुरुको आश्रय खोज्नुपर्दछ किनभने गुरुको अर्थ हो– सोझो र सुखद मार्ग-प्रदर्शक । शास्त्र अनन्त छन्, यिनीहरूको विषयवस्तु अनन्त छ, यिनीहरूको ज्ञान अनन्त छ, यी समस्त ज्ञान एकापसमा विभ्रमपूर्ण छ । शास्त्रहरूको यस जालमा अल्झिएको शिष्य अहंकार र गर्वले बाँधिएर मूल तत्त्वसम्म पुग्नै सक्दैन ।

**गुरुमंत्रो मुखे यस्य**
**तस्य सिद्ध्यन्ति मान्यथाः ।**
**दीक्षया सर्वकर्माणि**
**सिद्ध्यन्ति गुरुपुत्रके ॥१५७॥**

भावार्थ : निरन्तर गुरु मंत्रको जप गर्ने व्यक्तिका सम्पूर्ण कार्यहरू स्वतः सिद्ध हुन्छन् र गुरु दीक्षा (गुरु प्रदत्त शक्ति) द्वारा पनि उसका समस्त कार्यहरू स्वतः पूर्ण हुन्छन् । गुरु मंत्रको माध्यमले गुरुले शिष्यलाई आफ्ना प्राणहरूसँग जोड्नु हुन्छ र भृंग कीरा समान गुरुले यसै मंत्रको माध्यमले आफ्नो स्वरूप प्रदान गर्नु हुन्छ । गुरु शोक भेदबाट पर हुनुहुन्छ । तसर्थ, जब शिष्य गुरुमय बन्दछ तब उसका जीवनका शोक, दुःख समाप्त हुन्छन् ।

**भवमूल विनाशाय**
**चाष्टपाश निवृत्तये ।**
**गुरुगीताम्भसि स्नानं**
**तत्त्वज्ञः कुरु ते सदा ॥१५८॥**

भावार्थ : जन्म-मृत्युको मूल कारण अज्ञानको नाशका लागि, अष्टपाशहरूबाट छुटकारा पाउनका लागि विज्ञ साधकहरू गुरु-गीतारूपी गंगामा स्नान गर्दछन् । जीवनमा गुरुको खोजी महत्त्वपूर्ण कार्य हो । जीवनमा गुरु प्राप्त नभएसम्म यस भवसागरलाई पार गर्नु सम्भव नै छैन । यी अष्टपाशले जीवलाई कसेर राखेका छन् । स्वतः कहिल्यै पनि जीव यी अष्टपाशहरूबाट विमुक्त हुन सक्दैन । तसर्थ विज्ञ व्यक्ति यस गुरु-गीताको ज्ञानको आश्रय लिएर मुक्तिको उपाय प्राप्त गर्दछन् । जय गुरुदेव !

नयाँ वर्ष, परमपूज्य सद्‌गुरूदेव डा. नारायणदत्त श्रीमालीज्यूको ७६ औं अवतरण दिवस, सिद्धाश्रम शक्ति केन्द्रको दशौं वार्षिकोत्सव, गोरक्ष प्रकट दिवस एवं छैटौं रोट महोत्सवको पावन अवसरमा सम्पूर्ण साधक-साधिका एवं भक्तजनलाई गोरक्ष निखिल युग स्थापनाको महान् कार्यमा सदैव तन, मन र आत्माले समर्पित हुने प्रेरणा प्राप्त भइरहोस् भनी परमपूज्य सद्‌गुरूदेवहरूसमक्ष हार्दिक प्रार्थना गर्दछौं ।

**गुरूसेवा दल**

---

नयाँ वर्ष २०६६ सालको सुखद उपलक्ष्यमा सुख, शान्ति, सुस्वास्थ्य, दीर्घायु एवं समृद्धिको लागि हार्दिक मंगलमय शुभ-कामना व्यक्त गर्दछौं ।

**गौतम लाल श्रेष्ठ**
अध्यक्ष
तथा
**विशाल बजार व्यापार संघ परिवार**
फोन: ४२२१९७५

---

नववर्ष २०६६ को शुभ अवसरमा सम्पूर्ण नेपालीहरूमा हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

**श्री रेडीमेड स्टोर्स, पसल नं. ४३**
**विशाल बजार, भुईं तल्ला**
(यहाँ रेडीमेड तथा अन्य सम्पूर्ण नयाँ नयाँ सामानहरु सुपथ मूल्यमा उपलब्ध हुनेछ)

---

## शुभ-कामना

हाम्रा कनिष्ठ सुपुत्र श्री दीक्षित तुलाचन सुश्री सुमिना शेरचनसँग वैवाहिक वन्धनमा बाँधिनु भएको शुभ अवसरमा सुखमय दाम्पत्य जीवनका लागि परमपूज्य सद्‌गुरुदेवहरुको चरणकमलमा सभक्ति प्रार्थना गर्दछौं ।

**गोपी तुलाचन** **मीरा तुलाचन**

साथै नयाँ वर्ष २०६६ सालको हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

**तुलाचन फेन्सी स्टोर्श**
**पृथ्वी चोक, पोखरा**
**फोन: ०६१-५२०२३८**

# दिव्य साधनात्मक सूत्रहरू

*मन्त्र साधनाको क्षेत्रमा अघि बढेर उच्चता हासिल गर्न चाहने सम्पूर्णका लागि अत्यन्त महत्त्वपूर्ण सूत्रहरू जसको अक्षरश: पालना गर्नाले मात्र सफलता प्राप्त हुन्छ, यस्ता दिव्यतम सूत्रहरू श्री साबर संरचना शक्ति केन्द्रद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा रचित ग्रन्थ 'मन्त्र साधना–ऊर्ध्वसंगति'को खण्ड घ (साबर संरचनाबाट प्राप्त दिव्य साधनात्मक सूत्रहरू) पाठकवर्गको लाभार्थ क्रमश: प्रकाशित गर्दै आइरहेका छौँ । हामीलाई आशा एवं विश्वास छ, यी सूत्रहरूले यहाँहरूको साधनात्मक उच्चता प्राप्तिमा अवश्यमेव ठोस योगदान दिनेछन् ।*

## रङ शक्ति

साधनामा अगाडि बढ्ने प्रत्येक व्यक्तिलाई रङ शक्तिको गूढ रहस्यबारे थाहा हुनु जरुरी छ । रङ शक्तिभित्र लुकेको वास्तविक साधनाको सफलताको बारेमा धेरैलाई थाहा हुँदैन । रङ शक्तिलाई बुझेर त्यहीअनुरूप आफूलाई ख्याल राख्न सक्यौँ भने मन्त्र साधनामा सफलता हासिल गर्न सकिन्छ । रङ भन्ने बित्तिकै हामी बाहिरी चीजहरूको देखिने रङलाई देख्दछौँ । सृष्टिमा थुप्रै वस्तुहरू, चीजहरूले आ-आफ्नै स्वभाव एवं प्रकृतिअनुसारका रङ ग्रहण गरी आफ्नो रङ तपाईं-हामीसमक्ष पठाइराखेका हुन्छन् । कुनै पनि वस्तुले सूर्यको किरणमा समाहित सात रङ आफूले लिई कुनै रङलाई प्रवाहित गर्दछ र फलस्वरूप हामीले विभिन्न रङका पदार्थहरू, वस्तुहरू देख्दछौँ । कोही रातो, कोही पहेँलो, हरियो, निलो, सेतो, कालो, सुन्तला, बैजनी, खैरो, आदि रङहरू र यिनीहरूको मिश्रणले बन्ने अरू धेरै खालका रङहरू हामीले देख्न सक्छौँ । प्रत्येक रङको आफ्नै महत्त्व हुने गर्दछ, आफ्नै प्रभाव हुने गर्दछ ।

वैज्ञानिकहरूले पनि रङका बारेमा धेरै खोज, अनुसन्धान गरेका छन् जुन कुरा हाम्रा पूर्वज ऋषिमुनिहरूले शताब्दीऔँ अगाडि खोज गरी पत्ता लगाएका थिए । मनुष्यको शरीरमा विभिन्न रङहरू हुने गर्दछन् । यी रङहरू थपघट हुँदा व्यक्तिमा विभिन्न रोगहरू देखा पर्दछन् भन्ने कुरा स्वास्थ्य विज्ञानले पनि प्रमाणित गरिसकेको छ । त्यस्तै मानव शरीरभित्र निहित विभिन्न चक्रहरूका आ-आफ्नै रङहरू हुन्छन् । यी रङहरूलाई बुझ्न सके चक्रहरू जाग्ने कुरा पनि अध्यात्म शक्तिहरूले प्रमाणित गरिसकेका छन् । मानव शरीरमा हुने रङको प्रभावले मनुष्यको समग्र जीवनलाई नै प्रभाव पारिरहेको हुन्छ जुन कुराको हामीलाई पत्तो नै हुँदैन । हुन त सृष्टिदेखि नै प्रकृतिमा राम्रा रङ र नराम्रा रङहरूको प्रभाव रहँदै आएको देखिन्छ । मनुष्यले आफ्नो शरीरमा व्याप्त रङअनुसार नै प्रकृतिको रङ तानिरहेको हुन्छ । यदि शरीरमा राम्रो रङको बोलबाला छ भने प्रकृतिबाट पनि त्यस्तै रङ प्राप्त गर्दछ । यदि शरीरमा नराम्रो शक्तिको प्रभाव बढी छ भने प्रकृतिबाट पनि नराम्रै शक्ति ग्रहण गर्दछ । रङअनुसारको प्रकृति मनुष्यमा देखा पर्न थाल्दछ । राम्रा रङको प्रभाव पर्नेहरू खुशी, शान्त, सौम्य, आनन्दित, धैर्यवान्, संयमी, आदि हुन्छन् भने नराम्रा रङको प्रभाव पर्नेहरूमा रिसाइरहने, चिडचिडे स्वभावका, असन्तोषी, चिन्ताग्रस्त, भयग्रस्त, सधैँ आत्तिरहने आदि इत्यादि लक्षणहरू देखा पर्न थाल्दछन् । यसरी व्यक्तिमा हुने रङले साधनाको सफलतामा ठूलो भूमिका खेलेको हुन्छ ।

जो व्यक्ति पूर्ण श्रद्धा, भक्ति, विश्वासका साथ धैर्यवान् भएर अगाडि बढ्दछ, उसमा राम्रा रङहरू व्याप्त हुन थाल्दछन् । जसको शरीरमा राम्रा रङहरू हुन्छन्, भगवान्ले पनि उनीहरूलाई नै साथ दिन्छन् । कारण मनुष्यको विभिन्न रङ भएजस्तै देवी-देवता, भगवान्हरूको पनि विभिन्न रङ हुने गर्दछ । यही रङको आधारमा दैवीशक्तिबाट हामीले रङकै रूपमा आशीर्वादहरू प्राप्त गर्दछौँ । हामीले टेलिभिजनका धार्मिक शृङ्खलाहरूमा पनि देख्छौँ कि भगवान्ले आशीर्वाद दिँदा हातबाट विभिन्न रङ निस्केको हुन्छ । आशीर्वाद रङको रूपमा नै प्राप्त हुन्छ भन्ने सांकेतिकरूपमा देखाउने गरिन्छ । यसरी नै साधनामा अगाडि बढ्ने प्रत्येक व्यक्तिले पनि सम्बन्धित देवी-देवताको रङसँग आफ्नो रङशक्ति मिलाउन सकेमा साधना सहजै सिद्ध हुन्छ ।

पहेँलो रङलाई आध्यात्मिक रङ मानिन्छ । यसलाई पूर्णताको प्रतीक पनि मानिन्छ । मनुष्यले भित्रैदेखि आफ्नो चालचलन, स्वभाव, सम्पूर्णमा परिवर्तन ल्याएर पहेँलो रङमा रूपान्तरण हुने चेष्टा गर्नु पर्दछ । साधनामा अगाडि बढ्ने प्रत्येक व्यक्तिले रङ मिलाउनलाई कोशिस गर्नु पर्दछ । हुन त यही रङको गूढ रहस्यलाई बुझेर होला प्राय:जसो अध्यात्ममा लाग्ने, साधु, सन्त, योगी आदिहरूले पहेँलो वस्त्र लगाउने गरेको ।

कसैले आत्माको रङ भनेर सेतो रङको कपडा लाउँछन्, कसैले संसारदेखि वैराग्य आओस् भनेर पनि यस्ता रङहरू प्रयोगमा ल्याएको पाइन्छ ।

शरीरमा व्याप्त रङले व्यक्तिको समग्र विचार-भावना, सोचाइ, चिन्तन, कार्य गर्ने शैलीदेखि लिएर हेर्ने दृष्टिकोणमा समेत प्रत्यक्ष प्रभाव पारेको हुन्छ। त्यसैले जहिले पनि पहेँलो रङको निर्माणमा लाग्नुपर्ने हुन्छ । पहेँलो रङ शरीरमा जति व्याप्त गराउन सक्छौँ त्यति नै छिटो साधनामा सफलता प्राप्त गर्न सक्दछौँ । राम्रा रङहरूको निर्माणले ध्यान एकाग्र गर्न, एकचित्त भएर साधनामा भित्रभित्रै डुब्न, आदि जस्ता विभिन्न कुरामा मद्दत पुऱ्याउँदछ । शरीरमा खैरो रङको मात्रा बढ्यो भने हामीमा वेचैनी, छटपटी, घमण्ड, अहंकार, रिस, राग, द्वेष, ईर्ष्या आदि जन्मिन थाल्दछन् । हामी एकाग्र, एकचित्त हुन सक्दैनौँ, साधना गर्ने मानसिकता नै हुँदैन, गुरु एवं दैवीशक्तिप्रतिको भक्तिभाव नै घट्न थाल्दछ र साधनात्मकरूपमा अगाडि बढ्न अत्यन्त दुष्कर हुन्छ ।

त्यसैले रङ शक्तिको महिमालाई बुझौँ, पहेँलो रङ शरीरमा व्याप्त गराऔँ, साधनामा सफलता प्राप्त गरौँ ।

जय गुरुदेव !

*संसारमा सृष्टि भएका हरेक प्राणी, हरेक बोटबिरुवा वनस्पति, हरेक वस्तु सबैका आ–आफ्नै धर्म हुन्छन्। धर्म भन्ने शब्दको शाब्दिक अर्थ जे जस्तो भएता पनि कुनै पनि कुरा धर्मभन्दा अलग छैन। संसारलाई नै धर्मले अड्याई राखेको छ। प्रत्येक ग्रह, नक्षत्र, सौर्य मण्डल, प्रकृति, मानव सम्पूर्णका आ–आफ्नै धर्महरु निर्धारण गरिएका छन्। हुन त समाजमा धर्म भन्नेबित्तिकै हामीले हिन्दु, ईसाइ, मुस्लिम, जैन, सिख आदि विभिन्न स्वरुपका धर्महरु भनेर बुझ्ने गर्दछौँ। ती त पछि धर्मका रुपमा निर्माण भएका कुराहरु हुन्। मूलभूत कुरो र कुरोको चुरो त हामी मानव भएर जन्मे पछि सबैभन्दा ठूलो हाम्रो धर्म भनेको मानवता हो। जुन मानवमा मानवता नै हुँदैन त्यो मानव धर्मबाट च्युत भैरहेको हुन्छ। धर्म कुनै संघ, सम्प्रदाय, जाति आदिमा आधारित हुँदैन। यो त परमात्माले नै सृष्टि गर्दा सबैको आ–आफ्नै धर्म दिएर पठाउनु भएको हुन्छ। अन्य धर्म त हाम्रो समाजमा आइसकेपछि समाजले लगाइदिने लेवल मात्रै हो। संसारका कुनै पनि प्राकृतिक वस्तुहरुले, जीवजन्तुहरुले, ग्रह नक्षत्र सूर्य चन्द्र ताराले कहिल्यै कहिल्यै आफ्नो धर्म छोडेका छैनन्। सबै आ–आफ्नै धर्ममा अडिरहेका छन्। धर्म छोडेको छ भने केवल मानवले मात्र। मानवले आफ्नो धर्म छोड्दै गएको कारण नै आज संसारमा सबैभन्दा दुःखी प्राणीकोरुपमा मानव रहेको छ। हुन त भन्ने गरिन्छ संसारमा सबैभन्दा सुखी र सबैभन्दा चलाख प्राणी मानव नै हो। तर त्यो सुख, त्यो चलाखी जसले मानवतालाई नै अथवा मानव हुनुको धर्मलाई नै समाप्त गरिरहेको छ त्यस्तो सुख, त्यस्तो चलाखीपन कुनै काममा आउनेवाला छैन। त्यसले न त शान्ति दिएको छ न त आनन्द नै। वर्तमान अवस्थामा हेर्ने हो भने मानवको तुलनामा बरु जंगलका अरु प्राणीहरु आनन्दित होलान्, सुखी होलान्। बोट, बिरुवा वनस्पतिहरु आनन्दित होलान्, सुखी होलान् किनकि उनीहरुले आफ्नो धर्म छोडेका छैनन्। मानवभित्रको मानवता नै हराएर गइरहेको वर्तमान परिप्रेक्ष्यमा धर्मलाई बुझ्नु जरुरी छ। यदि मानवता झिकिदिने हो भने मानव हुनुको के अर्थ रह्यो ? मानवमा दया, करुणा, क्षमा, सद्भाव, सद्विचार, सत्कार्य नै रहेन भने संसारको सबैभन्दा महत्त्वपूर्ण प्राणी, सबैभन्दा विकसित प्राणी भनेर भन्नुको पनि के अर्थ रह्यो र ? तसर्थ धर्मको विभेदमा अल्झिएर तेरोभन्दा मेरो धर्म राम्रो भन्ने भावनाले एक आपसमा राग, द्वेष, ईर्ष्या उत्पन्न गरे धार्मिक बन्न सकिँदैन। धार्मिक त त्यो हुन्छ जसले आफ्नो प्राकृतिक धर्म, परमात्माले दिनुभएको धर्मलाई पालन गर्दछ। यदि एकैछिन परिकल्पना गरौँ त मानवले जस्तै सूर्य, चन्द्र, तारा, नक्षत्र आदिले पनि आ–आफ्नो धर्म छोड्दै गए भने यो पृथ्वीको अवस्था के होला। सूर्यले एक दिन म उदाँदिन भनेर एकदिन उदाउन छोडिदिए भने हाम्रो के हाल होला। प्रकृतिले फूल फूलाउन छोडिदिइन् भने, अन्न अनाज उत्पादन गर्न छोडिदिइन् भने, पानी पर्ने समयमा पानी परेन भने, नपर्ने समयमा धेरै पर्‍यो भने हाम्रो हालत के होला। तर त्यस्तो भएको छैन र हुँदैन पनि। किनभने सबै आ–आफ्नो नियम र आ–आफ्नो धर्ममा चल्दछन्। मानव मात्रै आफ्नो नियम र धर्ममा चल्न सकेको छैन किनभने उ उपबुज्रुक बनिरहेको छ। मान्छेले वैज्ञानिक प्रगति र वैज्ञानिक विकाससँगसँगै आफैँलाई नै प्रकृतिभन्दा माथि राख्न खोजिरहेको छ। प्रकृतिलाई दोहन गरिरहेको छ। प्रकृतिमाथि हस्तक्षेप गरिरहेको छ। परमात्माको सृष्टिलाई असन्तुलित गर्ने कोशिश गरिरहेको छ। यसैको फलस्वरुप प्रकृतिमा पनि विभिन्न किसिमका दैवी विपत्तिहरु दिन प्रतिदिन बढ्दै गइरहेका छन्। मौसमी प्रतिकूलताहरु दिन प्रतिदिन बढ्दै गइरहेका छन् जसको परिणाम तपाईँ हामी सबैले भोग्नु परिरहेको छ। त्यसैले धर्म जसरी प्रकृतिका हरेक जड चेतन वस्तुले पालन गरिरहेका छन्, तपाईँ हामीले पनि मानव हुनुको धर्म पालन गरौँ। धार्मिक बनौँ र मानव भएर जिउनुको सार्थकता त्यतिखेर मात्रै हुन्छ जतिखेर हामीभित्र मानवता रहन्छ। मानवताको अभावमा न त हामी आनन्दपूर्वक आफू बाँच्न सक्छौँ न त अरुलाई नै बचाउन सक्छौँ। यो संक्रमण कालमा प्रकृतिको रक्षा गर्नु पनि हामी मानवको धर्म हो। त्यसैले सबैलाई आफ्नो धर्म पालन गर्ने छुट दिऔँ। आ–आफ्नो धर्ममा रहने छुट दिऔँ। कसैको धर्ममाथि कसैले हस्तक्षेप नगरौँ। यसैमा नै हामी सबैको कल्याण छ। अस्तु!*